● वर्ष १० ● अङ्क ११ ● आषाढ २०६६ ● पूर्णाङ्क ११९

● **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
फोन: ०५६-५२१३८५
● **गोरखा**, सौरपानी–३ पोखरी,
फोन: ९७४६०१८८७८, ९७४११२७७४५
● **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
फोन: ०६१-५३०७८६
● **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
फोन: ०४६-५४००११
● **पाल्पा**, तानसेन,
फोन: ९८४७०-२८१८८
● **ललितपुर**, लगनखेल,
फोन:२२२००२१
● **गोरखा**, बसपार्क,
फोन: ०६४-४२०३४८
● **तनहुँ**, दमौली, व्यास गुफा,
फोन: ०६५-५६१६६२
● **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
● **भक्तपुर**, कटुन्जे-१,
फोन: ०१-६२१३४५५
● **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
फोन: ०१-६२२५१७२
● **कास्की**, लेखनाथ चोक,
फोन: ०६१-२२९१९०
● **सिन्धुली**, रातमाटा
● **स्याङ्जा**, स्याङ्जाबजार
फोन: ९८४६०-४४३५४
● **चितवन**, गौरीगञ्ज
● **सिन्धुपाल्चोक**, बाह्रबिसे
फोन: ०१-६९१६५९३
● **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी

पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा प्रकाशित***

## गुरु पूर्णिमा विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र बुधवार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौँ, नेपाल**
**फोन नं:** २०७१२००,२१००१५३, **पत्रिका वितरण फोन नं:** ०१-६२२५१७७ (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

आध्यात्मिक समाजको निर्माणका लागि सिद्धाश्रम शक्ति केन्द्रले आफ्ना कार्यहरुलाई सुसंगठित गर्दै अगाडि बढेको छ । समाजलाई सुव्यवस्थित गरी आवश्यक मार्गदर्शन प्रदान गर्दै आफ्ना सांगठनिक संरचनाहरु समाजमा लागू गरी अगाडि बढेको छ। आजको देशकाल परिस्थितिले पनि आध्यात्मिक शक्तिको अनिवार्य आवश्यकता महसुस गराएको छ। आध्यात्मिकताबिनाको समाज अपूरो र अधुरो हुन्छ अर्थात् लङ्गडो हुन्छ । लङ्गडो समाजले गति लिन सक्तैन । यस्तो समाज अस्थिर र अन्यौलमा गुज्रेको हुन्छ । सामाजिक जनजीवन अस्तव्यस्त हुन्छ । समाज बिग्रनुको पछाडि समाजको नेतृत्व पक्षको, समाजको जिम्मा लिएका व्यक्तिहरुमा भर पर्दछ । जब जिम्मेवार व्यक्तिहरु बिग्रन्छन्, उनीहरुको सोच राम्रो हुँदैन, उनीहरुको दृष्टिमा सुधार आउँदैन तबसम्म समाजले पनि स्पष्ट खाका प्राप्त गर्न सक्तैन । समाजले एउटा मार्ग खोजिरहेको हुन्छ, व्यक्तिले अर्कै मार्गमा हिँडाउन खोज्दछ । त्यसले गर्दा पनि समाजमा झने नकारात्मक असर पर्दछ र समाज अस्थिर, अन्यौल र अशान्तिको चपेटामा पर्न थाल्दछ । त्यसैले, मार्ग देखाउनेहरु आध्यात्मिक भावनाले ओतप्रोत हुनुपर्दछ । तब मात्र स्पष्ट खाका तयार हुन्छ । अनि मात्रै समाजले शान्ति र स्थिरता प्राप्त गर्दछ ।

यसपालिको अङ्कलाई हामीले 'गुरु पूर्णिमा' विशेषको रुपमा निकाल्ने जमर्को गरेका छौँ । गुरु पूर्णिमा शिष्यहरुको महापर्व हो । शिष्यहरुको अत्यन्त पावन पर्वको रुपमा गुरु पूर्णिमालाई लिइएको छ । गुरुहरुलाई आदर, सम्मान व्यक्त गरिने, उच्च श्रद्धा, भक्ति, समर्पण व्यक्त गरिने महोत्सव हो । गुरु भएर नै शिष्यको अर्थ हुने हो, शिष्यको प्राणाधार नै गुरु हुनुहुन्छ । त्यसैले, शिष्यको अस्तित्व गुरुमा लुकेको हुन्छ । गुरुबाट नै शिष्यको पहिचान हुने गर्दछ ।

अन्तमा, यस गुरु पूर्णिमा विशेष निकाल्ने कोशिशमा हामीले अंशरुप भए पनि समेट्ने कोशिश गरेका छौँ । गुरु र गुरु पूर्णिमाको विराटता, उच्चतालाई शब्दमा समेट्न सकिँदैन । तैपनि जानकारीको हिसाबले केही पक्षहरुलाई यस अंकमा समावेश गरेका छौँ, यसैलाई पूर्ण नठानिदिनुहोला ।

अन्तमा, यस अंकको प्रकाशनको क्रममा हामीबाट भए गरेका समस्त गल्ती, कमी-कमजोरी, न्यूनताका लागि परमपूज्य सद्गुरुदेवहरु एवं यहाँहरुसँग पनि क्षमायाचना गर्दै आवश्यक सल्लाह, सुझावको अपेक्षा गर्दछौँ । अस्तु ।

*परमपूज्य सद्‌गुरुदेवले आफ्नो अवतरणकालमा पावन गुरु पूर्णिमाको अवसरमा आफ्ना शिष्यहरूलाई शुभकामना दिनुहुँदै लेख्नुभएको पत्रको सारांश ।*

'गुरु पूर्णिमा'को यो मङ्गलमय दिव्य पर्व तिमीहरू सबैको लागि शुभ रहोस् ।

यो पर्व 'स्व'लाई बुझ्ने हो । हामीले आफूलाई नियालौँ, आफ्नो आत्मविश्लेषण गरौँ र हेरौँ कि हामी के हौँ ? जीवनमा यति धेरै बसन्त पार गरेपछि पनि केवल पत्नी, पुत्रको मोह र धनादिको चक्करमा नै अल्झिएका छौँ कि ? वा कहिले निर्मुक्त वातावरणमा सास लिएर आफ्नो स्वलाई उच्च गर्ने प्रयत्न पनि गरेका छौँ ? जीवनलाई ऊर्ध्वमुखी बनाउनेतिर पाइला चालेका छौँ ? शान्त, सुखद र अनिर्वचनीय त्यस ब्रह्‌मलाई साक्षात्कार गर्नेतिर उन्मुख भयौँ ?

यदि अहिलेसम्म गरेका छैनौ भने कहिले गर्ने ? के वृद्धावस्थामा ? यो त सम्भव छैन । ईश्वरले तिमीलाई जुन शरीर दिनुभएको छ, त्यो यस सांसारिक चक्करमा अल्झिनका लागि होइन, यस चक्करबाट निक्लनका लागि दिनुभएको हो, भवसागरबाट पार हुनका लागि दिनुभएको हो, आफ्नो स्वलाई आत्मतत्त्वसँग जोड्नका लागि दिनुभएको हो ।

र, यो जोड्ने क्रिया गुरुबाट सिक्न सकिन्छ । उहाँको चरणमा बसेर बुझ्न सकिन्छ, उहाँको हृदयलाई आत्मसात् गरेर विचार गर्न सकिन्छ । यो पर्व तिमीलाई यही सम्झाउनका लागि हो कि आफ्नो लागि तिमी तीन सय चौसठ्ठी दिन जिउँछौ, एक दिन त अर्काका लागि पनि जिएर हेर, भौतिकताबाट दग्ध आँचले त्रस्त तिम्रो हृदयलाई कति धेरै शान्ति, सन्तोष र आनन्द प्राप्त हुन्छ ?

यो पर्व मिलनको पर्व हो– बेग्लाबेग्लै रहनका लागि होइन । पाप कर्मको उदयबाट, वातावरणको विषाक्तताबाट वा अन्य कारणले तिम्रो हृदयमा भ्रान्ति कलुषितता वा आशंका उठेको छ भने त्यसलाई धुनका लागि, सही स्थिति बुझ्नका लागि, आफ्नो आशंका निवारणको यो दिन हो । जुन प्रकारले नदी उम्लिएर, उफ्रिँदै तोडफोड गरेर विध्वंसको रौद्ररूप धारण गरेर पनि जब समुद्रमा मिल्दछ तब त्यो सर्वथा शान्त हुन जान्छ, त्यसको उफ्राइ समाप्त हुन जान्छ, त्यसले पूर्णताका साथ समुद्रमा एकाकार भएर शान्ति... पूर्ण शान्ति प्राप्त गर्दछ । यसैप्रकार शिष्यले पनि मनमा व्यामोह, शंका, भ्रमको उफान र उछाल लिएरै पनि जब गुरुसँग मिल्दछ भने उसले सबै बिर्सेर शान्ति... पूर्ण शान्ति प्राप्त गर्दछ, यही त पूर्णता हो...यही त एकाकार हुनु हो... यही नै त्यो हो जसको प्रतीक्षा वर्षौंदेखि हामीलाई छ ।

र, जीवनको यस क्षणमा म तिमीहरू सबैलाई आह्वान गर्दछु कि तिमीहरु यस मलमूत्रले भरिएको जीवनबाट पर हटेर आफ्नो स्वलाई चिन्ने प्रयत्न गर । यस झूट, छलको विषालु वातावरणबाट निस्केर हिमालयतिर दृष्टि पुऱ्याऊ, त्यो दिव्य वातावरणले तिम्रो प्रतीक्षा गरिरहेको छ, त्यसको उज्ज्वल धवल शिखरले तिमीलाई बोलाइरहेको छ, शान्त, सुरम्य, स्निग्ध, पवित्र 'सिद्धाश्रम' तिम्रो प्रतीक्षा गरिरहेको छ कि तिमी त्यहाँ पुग, आफ्नो स्वलाई पूर्णता देऊ र त्यो कार्य गर जुन विरलै मानिसको भाग्यमा मात्र हुन्छ, र...

'त्यो गर्ने' यस यात्रामा म तिम्रो साथमा छु, पूर्णतासम्म पुऱ्याउने प्रयत्नमा मेरो प्रत्येक क्षण तिमीसँग धितोको रूपमा रहेको छ, मेरो घरको ढोका तिम्रो लागि चौबीसै घण्टा खुला छ, म तिम्रो त्यस पूर्णताको यात्रामा प्रतिपल, प्रतिक्षण सतत सहयोगी छु, साथ छु... निश्चिन्त भएर पहिलो पाइला त बढाएर हेर, म तिम्रो लागि के गर्न सक्दछु ?

### जीवनदानी बन

र यस यात्रामा, शिष्यहरूलाई पूर्णताको पथमा अग्रसर गराउन उनीहरुकै रेलपेलले मलाई बाध्य गरिरहेको छ । यस्ता शिष्यहरूलाई छान्नुपर्ने आवश्यकता मलाई भएको छ जो निर्मुक्त छन्, मानिसहरूलाई आलोचना, प्रत्यालोचनाबाट पर छन् । 'कबिरा यह घर प्रेम का, खाला का घर नांहि । शीश उतारे भुंई धरे वो बैठे धर नांहि ।' जो परिवारसँग निर्मोह छ, मलाई यस्तै नै जीवनदानी चाहिएको छ । जसले आफ्नो जीवनलाई दान गर्न सक्दछ, आफ्नो सर्वस्व समर्पित गर्न सकोस्, सबै कुरा तोडेर, छोडेर सदा सदाका लागि गुरु चरणमा उपस्थित हुन जाओस्... स्वयं... र पत्नीका साथ पनि... जो पारिवारिक सांसारिक जीवनबाट हटेर त्यस पूर्णताको पथमा अग्रसर हुनका लागि सन्नद छ, जुन अध्यात्मको पथ हो, दिव्यताको बाटो हो, पूर्णताको पाथेय हो, यस्तै जीवनदानी करोडौं मानिसका लागि ज्योतिस्तम्भ बन्न सक्छ ।

### जीवित ग्रन्थ रचना गर्नु छ

मैले ज्योतिष र धर्म, अध्यात्म र साधनामा त कैयौँ ग्रन्थको रचना गरेको छु । तर अब जीवित ग्रन्थको रचना गर्ने समय आएको छ । यस्ता शिष्यहरूको छनौट गरूँ जो जीवित ग्रन्थ बन्न तयार छन्, उनीहरूलाई साधना पथमा यति धेरै अगाडि बढाऊँ कि उनीहरूले आउँदा वर्षहरूमा करोडौं करोड मानवको कल्याण गर्न सकून्, तिनीहरूको

लागि मार्गदर्शक बन्न सकून्, ज्योतिस्तम्भ बन्न सकून्, र आफ्नो साधनात्मक आलोकमा आफ्ना माता-पिता र भारतवर्षको नाम उज्जवल गर्न सकून्, यस्ता शिष्यहरू पहिलो लाइनमा अगाडि आऊन् जसबाट म त्यस समर्पित शिष्यहरूको छनौट गरेर जीवित ग्रन्थ रचना कार्य प्रारम्भ गर्न सकूँ ।

वास्तवमा भन्ने हो भने समय धेरै कम छ, त्यसमा पनि पल प्रतिपल समय बितिरहेको छ, यस समयको सदुपयोग गरौं, साधक साधिकाहरू अगाडि आओं, यस न्यून समयमा, थोरै समयमा साधनाको क्षेत्रमा यस्तो केही गरेर देखाऔं जुन अद्वितीय होस्, अप्रतिम होस्, अनिर्वचनीय होस्, मेरो आँखाको सामु होस्, यी साधक साधिकाहरूले 'अनिर्वचनीय सिद्धाश्रम'मा प्रवेश पाउन सकून्, र आफ्नै आँखाबाट ती सयौं हजारौं वर्षदेखि तपस्यारत योगीहरूको दर्शन गर्न सकून्, उहाँहरूको साधनात्मक शीतल छायाँमा बसेर आफ्नो जीवनलाई धन्य गर्न सकून् । भर्तृहरिको शब्दमा–

गंगातीर हिमगिरि शिला बद्ध पद्मासनस्य
ब्रह्मध्यानाभ्यसनविधिना योगनिद्रा गतन्यः ।
किं तेभार्व्यं मम सुदिवसैर्यत्र ते निर्विशंका
कण्ड्यन्ते जरठ हरिणाः ल्वांगमंगे मदोये ॥

म कति अज्ञानी र मूर्ख थिएँ कि राज्य वैभव ऐश्वर्य भोगविलासलाई नै सबै थोक सम्झेर त्यसैमा लिप्त रहें, धेरै विलम्ब भइसकेपछि मलाई सही ज्ञान भयो यी सबै व्यर्थ छन्, स्वार्थ हुन् । अब त्यो समय कहिले आउला जब म सिद्धाश्रमस्थित 'सिद्ध गंगा'को तटमा हिमालयको सुरम्य शिलामा पद्मासनमा बसेर ब्रह्मध्यानमा लीन हुन सक्छु र साधनाको उच्च स्थितिमा पुगेर चन्द्रमाको शीतल अमृत वर्षिणी चाँदनीमा 'योगनिद्रा'लाई प्राप्त गर्न सक्नेछु । मेरो चारैतिर योगीहरूको दिव्य तेज आलोकित हुनेछ, म निश्चिन्त, निर्भय, निर्द्वन्द्व भएर ध्यानस्थ हुन सक्नेछु र बूढो हरिण निर्भय, निशंक भएर आफ्नो शरीरलाई मेरो देहबाट कन्याउनेछ, के मलाई यस्तो जीवन प्राप्त हुन सक्ला ?

र, म तिमीहरूलाई विश्वास दिलाउन चाहन्छु कि तिमीहरू अगाडि बढ, केही वर्षमा नै तिमीहरूले यस्तो दिव्य जीवन प्राप्त गर्न सक्नेछौ ।

मेरो सम्पूर्ण हृदयाशीर्वाद तिमीहरुको साथ छ । ❑

# तब गुरु पूर्णिमाको अर्थ खुल्दछ

'गुरुलाई श्रद्धा गर्ने र उहाँले पथप्रदर्शन गर्नुभएको यात्रामा हिँड्ने भन्ने अर्थ लिने गरेका छौं । जबसम्म साँचो अर्थमा त्यसलाई अध्ययन गरिँदैन, विषयवस्तुसँग नजिक भईंदैन, उद्देश्य पहिल्याएर आफ्नो गन्तव्य पहिल्याइन्न तबसम्म गुरु पूर्णिमाको अर्थ खुल्दैन ।'

यद्यपि गुरु पूर्णिमाको महत्त्व, गरिमा, महिमालाई केलाउन सम्भव छैन तैपनि एउटा संकेतसम्म भने दिन नसकिने होइन । सांगोपांगरूपमा गुरु पूर्णिमाको सम्बन्धमा भन्न नसके पनि आफूले जानेको विषयमा केही त बोलेर, केही लेखेरै भए पनि अभिव्यक्ति भने दिन सकिन्छ । यस्तै अभिव्यक्ति दिने क्रममा सरस्वती उच्च मा. वि. टोखामा अध्यापन गराउनुहुने प्रभात सापकोटाले माथिको विचार पोख्नुभएको हो । आफूलाई समयमा, अनुशासनमा, नैतिकतामा, मर्यादामा, सच्चरित्रतामा ढालेर, कुँदेर पसिना चुहाएर हुन्छ वा मगज खियाएर हुन्छ अथवा अन्य कुनै तरीकाले आफूलाई क्रियाशील गराएर योग्यता वृद्धि गर्ने र साँच्चिकै मान्छेजस्तै भएर सार्थक जीवन जिउने प्रयास नै हाम्रो गुरुप्रतिको आदर हो भन्ने सापकोटाज्यूको मान्यता हो ।

हामीले विद्यालयमा पढाउने शिक्षकलाई पनि गुरु मानेर पूजा गर्दछौं, वर्षमा एक दिन भए पनि फूलमाला र अबीर लगाइदिएर उहाँहरूको सम्मान गर्दछौं, मिष्ठान्न खुवाएर तृप्त गर्दछौं । के यही हो त वास्तविक गुरु पूजन र गुरु पूर्णिमाको स्वरूप ? साहित्यकारको रूपमा पनि परिचित सापकोटाज्यूको विचारमा मानिस मात्र गुरु होइन, कुनै दार्शनिक मात्रै पनि गुरु हुन सक्दैन, जन्तु-जनावर, पशुपन्छी, प्राणी, कीट-पतंगसमेत हाम्रा गुरु हुन सक्छन् र सबै प्रकारका दृश्य, वनस्पतिहरू पनि हाम्रा गुरु हुन सक्छन् । गुरुको कुनै सीमा, रेखा, धर्को, तौल आदि हुँदैन, यो त असीम विषय हो ।

नवजीवन स्कूल धापासीमा कक्षा १० मा पढ्ने सविन दाहालको विचार पनि यस्तै प्रकारको छ । उहाँ पनि हामीलाई कुनै पनि कोणबाट, कुनै पनि उपायबाट, कुनै

**मानिसको चेतनाको विशेषता नै यस्तो छ कि सम्पूर्ण सत्यको स्मृतिभन्दा तात्कालिक स्मृतिमा सीमित बन्न जान्छ । त्यसकारण त्यस्तो सम्पूर्ण सत्य ज्ञान दिनसक्ने गुरु चाहिएको छ, यस्तो क्षमता भएको व्यक्तित्व नै सत्‌गुरु हुनुहुन्छ ।**

पनि ज्ञानबाट दिशाबोध गर्न सक्ने व्यक्तिलाई गुरु मान्न सकिन्छ भन्ने धारणामा अडिग हुनुहुन्छ । हामीलाई ज्ञान दिने व्यक्ति र व्यक्तित्वलाई श्रद्धापूर्वक माला पहिराएर, अबीर लाइदिएर, फलादि खुवाएर मनाइने पर्व नै गुरु पूर्णिमा हो । उहाँका अनुसार वर्षभरि विद्यार्थीहरूलाई धेरै शिक्षा दिने र कुन बाटोमा जाने र कुन बाटोमा नजाने भनेर सही दिशाबोध गराउने भएकोले गुरुलाई उहाँको सम्मानार्थ गुरु दक्षिणाको रूपमा गुरु पूर्णिमा पर्व मनाउँछौँ ।

पुरोहितले दीक्षा दिने, मास्टरले पढाउने, कसैले केही सिकाउँदा पनि हामीले उहाँहरूलाई पूजा, सम्मान दिन्छौँ । यो सम्मान त उहाँहरूको ज्ञानलाई दिइएको हो । यो सम्मान त उहाँहरूको योग्यता, क्षमतालाई दिइएको हो । व्यक्ति विशेषलाई पूजा गरिने प्रथालाई वास्तविकरूपमा गुरु पूर्णिमा भन्न सकिन्न । गुरु त एउटा ज्ञान हो । हाडमासुको शरीरलाई गुरु मान्ने परम्परा गलत हो भन्ने मान्यतामा रहनुभएकी गृहिणी गंगा श्रेष्ठका अनुसार गुरुको विराट् र अतुलनीय ज्ञानलाई श्रद्धा गर्ने दिन हो गुरु पूर्णिमा ।

समाजमा गुरु पूर्णिमालाई अत्यन्तै पवित्र, दिव्य पर्वको रूपमा मानिन्छ । यो नै यस्तो पर्व हो जसमा शिष्यले ज्ञानगरिष्ठ गुरुबाट यथोचित ज्ञान पाएर आफूलाई सन्मार्गमा निर्दिष्ट गर्दछ र आत्मोन्नतिर अघि बढ्दछ । यही आत्मोन्नति नै गुरुका लागि वास्तविक दक्षिणा हो किनकि सच्चा सद्‌गुरुले सधैँ शिष्यको कल्याण चाहनुहुन्छ, आध्यात्मिक दृष्टिमा वास्तविक कल्याण भनेको आत्मोन्नति, भगवत्‌प्राप्ति हो, बुद्धत्व प्राप्ति र बोधपुरुष हुनु हो ।

यस्तै विचारलाई अघि सार्नुहुँदै फलित ज्योतिष तथा वास्तुशास्त्री पं. हरिओम अधिकारीज्यूले भन्नुभयो, 'आदिकालदेखि प्रचलनमा रहेको यो परम्परा अठार पुराण, सोह्र उपपुराण, चार वेद, छ शास्त्रका ज्ञाताको जन्मोत्सवको रूपमा सम्मान, आदर, सत्कार अर्पंदै मनाइन्छ । यसरी मनाउँदा हाम्रो समग्र उत्थान हुन्छ, समग्र उत्थान भनेको नै व्यक्तिले आफ्नो वास्तविक स्वरूप अर्थात् आत्मा पाउनु हो ।' गुरुकुल परम्परामा नै लामो जीवन व्यतीत गर्नुभएका अधिकारीज्यूले गुरु पूर्णिमाको तात्त्विक अर्थलाई केलाउनुहुँदै भन्नुभयो' 'अज्ञानरूपी अन्धकारलाई अंजनरूपी अर्थात् ज्ञानले सफा गरिदिनुहुने साक्षात् सद्‌गुरुको हामीले वार्षिकरूपमा जन्मोत्सव मनाउँछौँ त्यसैलाई गुरु पूर्णिमाको रूपमा लिने गरिन्छ ।' उहाँले 'गुरु' शब्दको अतुलनीय प्रतिष्ठालाई लक्षित गर्दै अगाडि भन्नुभयो, 'आदिकालदेखि नै अथवा सृष्टिको उत्पत्तिदेखि ग्रह गतिमा पनि गुरुको ठूलो महत्त्व रहेको छ, नौग्रहमध्ये वृहस्पति धर्मगुरुका रूपमा प्रतिष्ठित हुनुहुन्छ ।'

शास्त्रहरूमा 'गु'को अर्थलाई अज्ञानको रूपमा लिइन्छ । 'रु'लाई उज्यालोको प्रतीकस्वरूप मानेर गुरुले व्यक्तिको अन्धकारलाई निराकरण गर्नुभएर उसलाई उज्यालोतिर लानुहुन्छ भन्ने भनाइ पाइन्छ । गुरु त्यस्तो शब्द हो जसको उच्चारणमा हामी भावुक हुन्छौँ, हामीलाई रुन आउँछ, हाम्रो रोम-रोम पुलकित हुन्छ र हाम्रो मनमा अनायासै अपार हर्ष, आनन्द छाउँछ । यस्ता गुरुको महिमा भागवत्‌मा विस्तृतरूपमा गाइएको पाइन्छ ।

गुरु पूर्णिमाको महिमा गाउँदै प्रजापिता ब्रह्माकुमारी ईश्वरीय विश्वविद्यालय काठमाडौँ, ज्याठाका ब्रह्माकुमार किशोर भाइले भन्नुभयो, 'स्पष्ट आध्यात्मिक जीवन र आध्यात्मिक जीवनलाई चाहिने आध्यात्मिक ज्ञान दिनुहुने सत्‌गुरु हुनुहुन्छ, सम्पूर्ण मानवको कल्याण सत्‌गुरुले मात्र गर्न सक्नुहुन्छ र भगवान् शिव नै सत्‌गुरु हुनुहुन्छ । सत्यज्ञानबाट आफूलाई दिशाबोध मिल्ने र सही दिशाबोध सत्‌गुरुले मात्र दिन सक्ने उहाँको विचार थियो । मार्गदर्शन सही र गन्तव्य सही भयो भने हाम्रो आवागमन नहुने र यस स्थितिको प्राप्ति केवल सत्‌गुरुबाट मात्र प्राप्त हुन्छ भन्ने उहाँको ठोकुवा थियो ।

सर्वज्ञताको आधारमा सम्पूर्ण सत्यतालाई बुझेर त्यसअनुरूपको मार्गदर्शन गर्न सक्ने र त्यसअनुरूपको गन्तव्यमा पुऱ्याउन समर्थ हुने व्यक्तित्वलाई सत्‌गुरु भन्न सकिन्छ ।

सीमित ज्ञान, सीमित दृष्टि, सीमित सोच र सीमित क्षमता भएकाहरू पनि गुरु हुन सक्दछन् तर सत्‌गुरु त परब्रह्म परमात्माबाहेक कोही हुन नसक्ने हुनाले हामीले सम्पूर्ण सृष्टिको यावत् वृत्तान्तको ज्ञान पाउन गुरु पूर्णिमालाई आधार बनाउन सक्छौँ । मानिसको चेतनाको विशेषता नै यस्तो छ कि सम्पूर्ण सत्यको स्मृतिभन्दा तात्कालिक स्मृतिमा सीमित बन्न जान्छ । त्यसकारण त्यस्तो सम्पूर्ण सत्य ज्ञान दिन सक्ने गुरु चाहिएको छ, यस्तो क्षमता भएको व्यक्तित्व नै सत्‌गुरु हुनुहुन्छ । उहाँलाई आदर, श्रद्धा र विश्वास राखेर उहाँको स्मृति, भजन, सुमिरणमा रहने दिन नै गुरु पूर्णिमा हो । जय गुरुदेव !

# हृदय-ज्योतिलाई प्रज्ज्वलित गर्ने दिन

प्रत्येक उत्सव उल्लासको पर्व हो । हाम्रो संस्कृतिले उत्सवलाई संस्कारलाई भन्दा पनि समृद्ध बनाइदिएको छ । यस क्रममा व्यास पूर्णिमा यस्तै एउटा संस्कार सौरभ फैलाउने पुनीत पर्व हो ।

ऋषिहरू मन्त्र द्रष्टा थिए । बेग्लाबेग्लै ऋषिहरू तपस्या, ध्यानद्वारा मन्त्रवेत्ता बने । यी सबै मन्त्रहरूको संकलन महर्षि व्यासले गर्नुभयो । उहाँले वेदमन्त्रको रहस्यलाई सुगम बनाउनुभयो र मानवजीवनलाई समर्थ एवं समृद्ध बनाउनका लागि वेदमन्त्रको धारा प्रवाहित गर्नुभयो । त्यसैले उहाँ 'वेदव्यास' नामबाट परिचित हुनुभयो । उहाँको सारस्वत्य साधनालाई अभिवादन गर्न आषाढी पूर्णिमालाई 'व्यासपूर्णिमा'को रूपमा मनाइन्छ ।

आफ्नो आत्मस्वरूपको ज्ञान पाउन आफ्नो कर्तव्यको याद दिलाउने, मनलाई दैवी गुणहरूले विभूषित गर्ने, सद्‌गुरुको प्रेम एवं ज्ञानको गंगामा पौडी खेल्न बारम्बार प्रोत्साहित गर्ने पर्व हो– गुरु पूर्णिमा । भक्त, ऋषि, महर्षि, योगी र ज्ञानी मात्र होइनन्, मुक्ति चाहने यक्ष, गंधर्व, देवता आदि पनि उत्साहपूर्ण हृदयले यस शुभ, मंगल तिथिको स्वागत गर्दछन् ।

भगवान् वेदव्यासले वेदको संकलन एवं विभाजन गर्नुभयो । यसैले देवताहरूले यस शुभ दिनमा व्यासको पूजन गर्ने प्रथा शुरु गरे । यसै दिनदेखि व्यास पूजाको परम्परा चलिआएको हो । यस पूर्णिमाको दिन शिष्य आफ्नो ब्रह्मवेत्ता सद्‌गुरुको शरणमा गएर श्रद्धा, भक्ति एवं संयमले उहाँको पूजा गर्दछ भने उसलाई वर्षभरिको पर्व मनाएको फल मिल्दछ ।

महर्षि व्यासकै कृपाले हामीलाई आज शास्त्र-पुराण आदि पढ्ने अवसर प्राप्त भइरहेको छ । यसैले हामीलाई शास्त्र-पुराण-उपनिषद् आदि पढाउनुहुने, त्यसको गूढ अर्थलाई अन्तरमा प्रकाशित गर्नुहुने, हृदयको अज्ञान-ग्रन्थिलाई भेदन गरेर जीव-ब्रह्मको एकता गराउनुहुने र आत्मस्वरूपमा निमग्न हुने कला बताउनुहुने सद्‌गुरुलाई नै व्यास मानेर हामीले आदरपूर्वक, हृदयबाटै उहाँको पूजा गर्दछौँ ।

गुरु पूर्णिमा समर्पणको पर्व हो, एउटा आध्यात्मिक महोत्सव हो । यस पर्वमा शिष्यले सद्‌गुरुको प्रसन्नताका लागि तन, मन, धन सबै अर्पण गर्दछ । 'गुरुले त शिष्यको शिर माग्नुहुन्छ'– यस्तो एउटा लोकोक्ति पाइन्छ । तर यहाँ 'शिर' मात्र एउटा रूपक हो । यसको अर्थ यो हो कि शिष्य गुरुलाई अहंकाररूपी शिर अर्पण गरेर, उहाँको शरणागति स्वीकार गरेर तत्काल उहाँको अनुभवलाई आफ्नो अनुभव बनाओस् । यसैले सबै गुरुभक्त, सन्त, योगी, महापुरुष एवं शास्त्रहरूले गुरु महिमाको गान गरेर सद्‌गुरुको ऋणबाट उऋण हुने प्रयासलाई प्रमाणित गरेका छन् ।

गुरु महिमा अपरम्पार छ । मानवले सबै तीर्थको यात्रा गरेको भए पनि, सबै देवताहरूको पूजा गरिसकेको भए पनि, दान गरेको भए पनि, यज्ञ गरेको भए पनि जबसम्म सद्‌गुरुको पूजा गर्दैन तबसम्म उसका ती सबै क्रिया-कर्म अधूरो नै हुन्छन् । यदि केवल सद्‌गुरुको चरणमा मात्र चित्त लगाउँछ, गुरुपूजामा तल्लीन हुन्छ भने सबै क्रिया-कर्म नगरेरै पनि उसले अन्य विधि निषेधहरूलाई पार गर्दछ । यहाँ यस पंक्तिको स्मरण प्रेरणादायी छ–

**हरिहर आदिक जगत में पूज्य देव जो कोय ।**
**सद्‌गुरु की पूजा किये सबकी पूजा होय ॥**

गुरुहरूमा आदर्शको रूपमा महर्षि व्यासको आदरणीय स्थान छ । यसैले पनि गुरु पूजालाई व्यास पूजा भनिन्छ । गुरु पूजा एवं गुरु महिमालाई केवल हाम्रो वैदिक धर्मले मात्र स्वीकार गरेको नभई सिख, इसाई, जैन, बौद्ध आदि विश्वका सबै धर्महरूमा पनि गुरु महिमालाई स्वीकार गरिएको छ । जुन प्रकारले प्रेम, दया, मानवताजस्ता तत्त्व सबै धर्ममा समान छन्, यसरी नै गुरु महिमा पनि सबै धर्ममा समान छ । भगवान् श्रीमद् आद्य शंकराचार्यले त यहाँसम्म भन्नुभएको छ कि 'सबै सम्पत्ति, भोग, विद्या, तप, गौरव आदि प्राप्त भएका छन् र साधक पूर्ण विरक्त पनि भएको छ तर गुरु चरणमा श्रद्धा-भक्तिपूर्वक चित्तलाई लगाएको छैन भने उसका ती सबै प्राप्ति व्यर्थ छन् ।'

**मनश्चेन्न लग्नं गुरोरंघ्रिपद्मे**
**ततः किं ततः किं ततः किं ततः किम् ।**

संसारको सबै सम्बन्ध स्वार्थयुक्त छन् । पिता-पुत्र, पति-पत्नी, दाजु-भाइ, मालिक-नोकर आदि सबै सम्बन्ध स्वार्थका नै उपज हुन् तर सद्‌गुरु एवं सत्‌शिष्यको सम्बन्ध निस्वार्थ छ ।

भोलेबाबाले भन्नुभएको छ–

**सगे सम्बन्धी स्वार्थ के हैं स्वार्थ का संसार है ।**
**निःस्वार्थ सद्‌गुरुदेव हैं सच्चे वही हितकार हैं ॥**

**ईश्वर-कृपा होवे तभी सद्‌गुरु-कृपा जब होय है ।**
**सद्‌गुरु-कृपा बिन ईश भी नहीं मैल मन का धोय हैं ॥**

सद्‌गुरु-सत्‌शिष्यको अमर सम्बन्धको रसास्वादन उसैले गर्न सक्दछ जसको हृदयमा सद्‌गुरु प्रेम बसेको छ, गुरुभक्तिले डेरा जमाएको छ । चन्द्र दर्शनको सुख त चकोरलाई मात्र थाहा हुन्छ । यस्तै नै सद्‌गुरुको दर्शन, स्पर्श, पूजन, अर्चनको महत्त्वको रहस्यलाई एक सच्चा सद्‌गुरु भक्तले मात्र जान्दछ ।

गुरु पूजन गर्ने बेलामा रोम-रोम पुलकित होस्, हृदय गद्‌गद् होस्, आँखाबाट प्रेमको आँसु छचल्कियोस्, मनले संकल्प-विकल्प छोडेर गुरु मूर्तिको ध्यान गरोस्, वाणी स्तब्ध हुन जाओस् 'धन्य गुरु ! जय गुरु !' को भाव वर्षियोस् एवं अहं भावको दक्षिणा गुरु चरणमा अर्पित हुन जाओस्, तब जिज्ञासु सत्‌शिष्य कृतकृत्य हुन जान्छ ।

सद्‌गुरु पूर्ण हुनुहुन्छ । त्यसैले उहाँको पूर्णिमा मनाइन्छ । सद्‌गुरुले अन्तःकरणको अन्धकारलाई हटाउनुहुन्छ तथा आत्मज्ञानको युक्ति बताउनुहुन्छ । दीक्षाको दिनबाटै सद्‌गुरु शिष्यको अन्तःकरणमा निवास गर्नुहुन्छ । उहाँ यस्तो एउटा जगमगाउँदो ज्योति हुनुहुन्छ जसले शिष्यको निभेको हृदय-ज्योतिलाई प्रज्ज्वलित गर्नुहुन्छ, शिष्यको भवरोगलाई हटाउनुहुन्छ । उहाँ एक यस्तो माली हुनुहुन्छ जसले जीवनरूपी बगैँचालाई हराभरा एवं मगमगाउँदो गरिदिनुहुन्छ । उहाँले अभेदको रहस्य बताएर भेदमा अभेदको दर्शन गर्ने युक्ति सिकाउनुहुन्छ ।

शिष्यको योग्यता र सद्‌गुरुको कृपाको सम्मिलन नै मोक्षको द्वार हो । यस दुःखालय संसारमा एक मात्र गुरु कृपा नै यस्तो अमूल्य खजाना हो जसले मनुष्यलाई आवागमनको विकट कालचक्रबाट मुक्ति दिलाउँछ । जसलाई गुरुकृपा मिलेको छ ऊ धन्य हुन्छ !

**सद्‌गुरु जिसे मिल जाय, सो ही धन्य है जगमन्य है ।**
**सुर सिद्ध उसको पूजते, ता सम न कोउ अन्य है ॥**
**अधिकारी हो गुरुदेव से, उपदेश जो नर पाय है ।**
**भोला तरे संसार से, नहीं गर्भ में फिर आय है ॥**

हाम्रो जीवनमा गुरुको आवश्यकता सबैभन्दा बढी छ । मित्र, पुत्र, भाइ वा जीवनसाथी एवं धन, कला या आरोग्यभन्दा पनि गुरु विशेष अनिवार्य हुनुहुन्छ । गुरुले शिष्यलाई नयाँ जन्म दिनुहुन्छ, साधनाको मार्ग बताउनुहुन्छ एवं ज्ञानको प्राप्ति गराउनुहुन्छ । सच्चा गुरुले शिष्यको सुषुप्त जीवनशक्तिलाई जगाउनुहुन्छ । उसलाई योगको शिक्षा दिनुहुन्छ, ज्ञानको मस्ती दिनुहुन्छ, भक्तिको भाव-सरितामा अवगाहन गराउनुहुन्छ, कार्य गर्दा पनि निष्कामताले रहन सिकाउनुहुन्छ र यसै शरीरमा अशरीरी आत्माको ज्ञान गराउनुभएर जिउँदैमा मुक्ति दिलाउनुहुन्छ ।

गुरुले त्याग गराउनुहुन्छ भने केवल जीवत्वलाई, द्वेषलाई, मेरो-तेरो भन्ने मिथ्या मान्यतालाई गराउनुहुन्छ । उहाँले क्रोध गर्नुहुन्छ भने केवल अज्ञान-दृष्टिमाथि, भेदयुक्त व्यवहारमा, ईर्ष्या गर्नुहुन्छ भने केवल स्थूल शरीरमा आबद्ध हाम्रो जीव भावसँग ।

तर यस्तो सद्‌गुरु मिल्नु अति दुर्लभ छ । कैयौँ जन्मको पुण्यको फल एकैपटक प्राप्त भएपछि मात्र यस्तो सद्‌गुरुको सान्निध्यता प्राप्त हुन्छ ।

**दुर्लभो मानुषो देहो ।**
**देहीनां क्षणभंगुरः ॥**
**तत्रापि दुर्लभं मन्ये ।**
**वैकुण्ठ प्रिय दर्शनम् ॥**

यस्ता सद्‌गुरुको यथाशक्ति सेवा, पूजा गर्ने एवं उहाँप्रति कृतज्ञता प्रकट गर्ने दिन हो– गुरु पूर्णिमा । वेदव्यासजी आदि गुरु हुनुहुन्थ्यो । यसैले उहाँको नामबाट गुरु पूजालाई व्यास पूजा एवं आषाढी पूर्णिमालाई व्यास पूर्णिमाको नामले जानिन्छ ।

व्यास पूर्णिमा वर्षा ऋतुको आरम्भमा आउँछ । जसरी सूर्यको तापले तप्त भूमिलाई वर्षाबाट शीतलता एवं फल दिन योग्यता मिल्छ, त्यसैप्रकार गुरु चरणमा उपस्थित साधकलाई ज्ञान, शान्ति, भक्ति, योग आदि प्राप्त गर्ने योग्यता मिल्दछ ।

आजको दिनबाटै चतुर्माससम्म परिव्राजक संन्यासी एउटै स्थानमा बसेर ज्ञानगंगा बहाउँछन् । आश्रम वा मठधारी गुरु, आचार्यहरू आफ्ना शिष्यवर्गलाई जम्मा गरेर शास्त्रको ज्ञान दिन्छन्, उनीहरूको पुनरावर्तन गर्छन् तथा साधनाको नयाँ संकल्प गराउँछन् ।

आध्यात्मिक पाठशाला आजको दिनबाटै शुरु हुन्छ । पुरोहित आफ्ना यजमानलाई आजको दिनबाटै व्रत, अनुष्ठान, यज्ञ आदिको संकल्प गराउँछन् । साधक आजैको दिनबाट नै जप, तप, स्वाध्याय, अनुष्ठान आदिको संकल्प लिन्छन् एवं चतुर्मासको अवधिमा जति सकिन्छ त्यति बढी आध्यात्मिक खजाना बटुल्न कटिबद्ध हुन्छन् ।

यसप्रकार व्यास पूर्णिमा पर्व साधनाका लागि नयाँ प्रेरणा दिने, गुरुप्रति कृतज्ञता व्यक्त गर्ने र आफ्ना परम कृपालु गुरुको तत्त्वलाई आत्मसात् गर्नका लागि शुभकामना दिने पर्व हो ।

जय गुरुदेव ।

(साभार : ऋषिप्रसाद)

# यस्तो अवसर त गुरु पूर्णिमामा मात्र पाउन सकिन्छ

**–परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू**

*परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूले आफ्नो जीवनकालमा अनगिन्ती शिविरहरू संचालन गर्नुभयो । ती शिविरहरूमा व्यक्त उहाँका ओजस्वी उद्‌गार हरूले आज पनि उत्तिकै महत्त्व बोकेका छन् र युगौंयुगसम्म पनि पूज्यवरको श्रीमुखबाट उच्चरित ती उद्‌गारहरूले महत्त्व पाइरहने नै छ । सन् १९९५ हैदरावादमा सम्पन्न त्रिदिवसीय गुरु पूर्णिमाको अवसरमा उहाँले दिनुभएको प्रवचनले शिष्य, सद्‌गुरु र गुरु पूर्णिमाको गरिमा, महिमाका बारेमा स्पष्ट पारेको छ । उक्त प्रवचनलाई गुरु पूर्णिमाको अवसरमा पाठकहरूसमक्ष प्रस्तुत गरेका छौं । प्रवचनको पूर्ण अंशका लागि सिद्धाश्रम शक्ति केन्द्रको गोरक्ष निखिल पुस्तकालयमा उपलब्ध क्यासेट, सिडीहरू हेर्न आग्रह गर्दछौं ।*

गुरु पूर्णिमाको तीन दिन तीनै लोकको स्थायित्वको दिन हो । स्वर्गलोक, मर्त्यलोक र पाताललोकलाई एकत्रित वा संघीभूत गर्ने गुरु पूर्णिमाको दिन हो । कर्म र भाग्य, पुरुषार्थ र चेतना, भौतिक र आध्यात्मिकलाई समन्वय गर्दा गुरु पूर्णिमा हुन्छ । जहाँ कुनै प्रकारको न्यूनता हुँदैन, जहाँ आफै पूर्ण हुन्छ, जहाँ जीवनका सारा इच्छा पूर्ति हुन्छ, यस्तो दिनलाई गुरु पूर्णिमा भनिन्छ । पूर्ण आफैमा सबै दृष्टिबाट पूर्ण छ । न पूर्णमा केही घटाउन सकिन्छ, न त पूर्णमा केही बढाउन सकिन्छ । शिष्य पूर्ण होस्, आफैमा पूर्णताका साथ गुरु चरणमा समन्वित होस्, एकाकार होस्– यस्तो क्षण जहाँ पूर्णताका स्थापक, परिचायक गुरुदेव बस्नुभएको हुन्छ र हामी उहाँको चरणमा बसेर पूर्णता प्राप्त गरौं, जीवनका पाप, ताप, शोक, दुःख, दारिद्रय, कष्ट, पीडालाई समाप्त गर्दै आफ्नो जीवनलाई पूर्णता प्रदान गरौं, कुनै प्रकारको अभाव र न्यूनता नरहोस् । हामी पूर्ण छौं तर हामीलाई पूर्णताको ज्ञान छैन । हामी पूर्णता चाहन्छौं । पूर्ण हुने हामीलाई समय र स्थानको ज्ञान छैन । यदि हामी पूर्ण भइसकेका छौं भने जीवनमा के स्थिति छ, के आनन्द छ, के शक्ति छ, चेतना छ भन्ने कुराको आभास हामीलाई हुन सक्दछ ।

अरू सबै समय, व्रत, तिहार, पर्व, शिष्यका लागि हुन्, शिष्यहरूका तर्फबाट हुन्, केवल गुरु पूर्णिमाको दिन मात्र यस्तो दिन हो जसको समापनमा भगवान् शिवको प्रारम्भ हुन्छ, जसलाई व्यास पूर्णिमा भनिन्छ । वेदको पूर्ण रचना गरेपछि वेदव्यासले आफूलाई पूर्णता दिए । उनले भने– यो दिन आफैमा चैतन्य छ, जाग्रत छ, पूर्ण छ, सफल छ, श्रेष्ठ छ । यो तब मात्र हुन सक्छ जब हामीमा श्रद्धा होस्, हामीमा समर्पण होस्, हामीमा चैतन्यता होस्, हामीमा जीवन्तता होस्, जाग्रतता होस् र जाग्रतत्व भाव लिएर चेतनायुक्त बनेर यदि हामीले गुरु चरणमा आफैलाई समर्पित गर्छौं भने यो हाम्रो लागि सौभाग्यको कुरा हुन्छ । हामीमा जे न्यूनता छ त्यसको जानकारी होस्, जानकारी भएन भने त्यो आफैमा समाप्त हुन जान्छ । केही यस्तो होस्, केही यस्तो क्रिया हुन जाओस्, केही यस्तो घटना घटोस्, केही यस्तो स्थिति बनोस् कि हामी एकै क्षणमा उफ्रेर पूर्णतालाई प्राप्त गरौं, जीवनको आनन्दलाई, जीवनको उमङ्गलाई प्राप्त गरौं र सिद्धाश्रमको स्थानलाई, सिद्धाश्रमलाई हामीले चिन्न सकौं, जान्न सकौं,

जीवन्तता प्राप्त गर्न सकौं र आफ्नो आँखाबाट भगवद्पाद्, पूर्णताका प्रतीक, स्वामी सच्चिदानन्दजी र अन्य योगी, यति, संन्यासी, भगवान् श्रीकृष्ण र अन्य सयौं-सयौं ऋषिमुनिहरूको सान्निध्यता र सहचर्यमा हामीले जीवनलाई सम्पन्न गर्न सकौं, व्यतीत गर्न सकौं । यस्तो जीवन यस गुरु पूर्णिमाको अवसरमा नै प्राप्त हुन सक्दछ ।

गुरोपनिषद्‌मा बताइएको छ कि कुनै पनि यस्तो क्षण हुनुपर्दछ जुन क्षणमा हामीले आफूलाई जीवित, जागृत बनाउन सकौं, हामीले आफूलाई ऊर्जावान् बनाउन सकौं, हामीले महसुस गर्न सकौं, आफैमा पूर्ण समुद्रलाई समाहित गर्न सकौं । हाम्रा पूर्वज अगस्त्य ऋषिले अञ्जुलीमा भरेर पूरा समुद्रलाई सोसेका थिए, भगवान् कृष्णले पूरा विश्वलाई आफ्नो ज्ञान र गीताको चैतन्यताबाट परिपूर्ण बनाएका थिए। कृष्ण पनि ऋषि थिए, गुरु थिए, वशिष्ठले 'वशिष्ठ उपनिषत्'को माध्यमबाट बताएका थिए कि गुरु पूर्णिमामा प्रत्येक क्षण आफैमा चैतन्यता प्राप्त हुन्छ । यदि त्यसमा शिष्यले अवगाहन गर्दछ, स्नान गर्दछ, हिँड्छ, गतिशील हुन्छ भने उसलाई पूर्णता प्राप्त हुन्छ । विश्वामित्रले गुरु पूर्णिमाको अवसरमा यसको प्रशंसा गर्दै भनेका छन्– वर्षभरिमा केवल यी तीन दिन मात्र यस्ता दिन हुन् जहाँ सत्त्व, रज र तम, जहाँ महाकाली, महालक्ष्मी, महासरस्वती, जहाँ ब्रह्मा, विष्णु र महेश, जहाँ तीनै लोक र जीवनका सारा स्थितिलाई एकाग्रताका साथ समावेश गरिन्छ र पूर्णताको ज्ञान, चेतना, शिष्यहरूमा प्रदान गरिन्छ जसबाट शिष्य पनि आफैमा सूर्यजस्तै बनेर सम्पूर्ण विश्वमा प्रकाशित हुन्छ ।

राग, द्वेष, फूट, कपट, छलजस्ता विकृतिबाट हटेर कैलाश पर्वतभन्दा तलको मानसरोवरमा यस शिष्यरूपी पतवारलाई लिएर हामी सिद्धाश्रमरूपी मानसरोवरमा तीन दिनसम्म प्रेमपूर्वक हिँड्नेछौं । यो तीन दिनमा तिमीहरूलाई प्रेमको डुंगामा राखेर त्यस डुंगालाई खियाउँदै मैले सबै कुरा दिने प्रयास गर्नेछु जसबाट तिमीहरूले पूर्णता प्राप्त गर्न सक्नेछौ, वास्तवमा पूर्णताको महसुस गर्न सक्नेछौ ।

यी तीन दिन हाम्रो उमङ्ग र जोशका दिन हुन् । यी तीन दिन हाम्रो मस्ती र प्रसन्नताका दिन हुन् । यी तीन दिन हाम्रो लागि सबै दृष्टिबाट जीवनलाई उछाल्ने दिन हुन् । यी दिनहरूमा तिमीहरूलाई महसुस गराउन सकियोस्, तिमीहरूले आफैमा विश्वास गर्न सक्नेछौ– घर फर्किंदा तिमीहरूको अनुहारमा दिव्यता होस्, तेजस्विता होस्, भव्यता होस्, वास्तवमा तिमी अद्वितीय छौ भनेर सबैले मानून् । म तिमीहरूसँग यी तीन दिन यसरी नै बिताउँछु ।

यी तीन दिन दिन होइनन्, तीन युग हुन्... र यी तीन युग तब मात्र कहलिन सक्छन् जब हामीले प्रत्येक क्षणको उपयोगिता बुझ्न सक्नेछौं, साथर्कता बुझ्न सक्नेछौं, हामीले व्यर्थमा एक क्षण पनि बिताउने छैनौं र चकोरले जस्तै गुरुदेवलाई हेरिरहनेछौं । किनकि दर्शनले, स्पर्शले, ज्ञानले, चेतनाले, बोलीले, वार्तालापले, संवादले, सम्भाषणले निरन्तर एउटा अमृत झरना बगिरहन्छ र त्यस अमृतको झरनामा स्नान गरेर पवित्र हुँदै अमृत प्राप्त गर्छौं । गुरु पूर्णिमाको दिनलाई कल्पवृक्ष भनिएको छ । यी तीन दिनमा हामीले आफैमा कल्पवृक्ष बन्ने स्थिति प्राप्त गर्न सकौं, हामीमा पूर्ण वरदायक क्षमता प्राप्त होस् र समाजका मानिसहरू, हाम्रा भाइबन्धु, नातेदार, मित्र, स्वजनहरूलाई हाम्रो तर्फबाट केही यस्तो चीज प्रदान गर्न सकियोस् जुन सबैतिर फैलिएर एउटा चेतना उत्पन्न गर्न सकोस्, तिमी सक्षम र समर्थ, चेतनायुक्त ब्रह्मर्षि बन्न सक्षम होऊ । उक्त ब्रह्मर्षि बन्ने क्रियामा म तिमीहरूको साथ छु । यी तीन दिनमा यस्तो गर्नेछु जसबाट तिमीहरूले पूर्ण सफलता प्राप्त गर्न सक्नेछौ ।

शिष्य त्यो हो जसमा कुनै पनि शब्द आफूसँग हुँदैन । शिष्य त्यो हो जसले आफ्नो जिब्रोलाई जगाउँदैन । पीडायुक्त जिब्रो पनि आफैमा दुःखदायी हुन्छ र जब जिब्रोलाई अमृत प्रदान गरिन्छ तब त्यसले 'गुरुदेव' शब्दको उच्चारण गर्दछ । चाहे म आफ्नो गुरुदेवको उच्चारण गरूँ, चाहे तिमीहरूले आफ्नो गुरुदेवको उच्चारण गर, यो परम्परा त पच्चीस हजार वर्षदेखि चल्दै आइरहेको छ किनकि गुरु कुनै व्यक्तिको नाम होइन । यो एउटा ज्ञानको नाम हो, चेतनाको नाम हो, प्रकाशको नाम हो, पूँजीभूत स्वरूपको नाम हो । जब त्यस शब्दको उच्चारण गरिन्छ तब मनमा उमङ्ग र उत्साह उत्पन्न हुन्छ, यस्तो लाग्दछ कि हामी आफै मस्तीमा डुबेर उफ्रिरहेका छौँ, नाचिरहेका छौँ, कुदिरहेका छौँ र आफ्नो उमेरलाई, आफ्नो बुढ्यौलीलाई, आफ्नो न्यूनतालाई बिर्सेर पूर्ण मस्तीमा डुब्दैछौँ र महसुस गर्छौँ कि हामीले एउटा समुद्रलाई प्राप्त गर्‍यौँ, समुद्रलाई नाप्यौँ, पूरा ब्रह्माण्डलाई नाप्यौँ र केवल सूर्यलोक र चन्द्रलोक मात्र होइन, पूरा ब्रह्माण्डमा पाइला टेकेर निरन्तर गतिशील भइरहेका छौँ । तब हामीले पूर्णता प्राप्त गर्न सक्दछौँ र यस पूर्णतालाई प्राप्त गराउन प्रत्येक क्षण म तिमीहरूको साथमा छु । यदि तपाईंहरूको आँखा ममाथि टिकिरहन्छ भने म हरेक क्षण तपाईंहरूको साथमा छु ।

यहाँ मात्र होइन, हिमालयको कुना-कुनामा आज गुरु पूर्णिमा मनाइँदै छ । सिद्धाश्रममा यी तीन दिनलाई अद्भूत र ओजपूर्ण दिवस भनिन्छ । जहाँ मस्ती हुन्छ, जहाँ तरङ्ग हुन्छ, जहाँ ऋषिमुनि नाच्न लाग्दछन्, जहाँ भगवान् कृष्ण बाँसुरी बजाउन लाग्दछन्, जहाँ ऊर्वशी र अप्सराहरू नाच्न लाग्दछन्, जहाँ गन्धर्व गाउन थाल्दछन्, यस्तो स्थितिको निर्माण हुन लाग्दछ जहाँ

**पूर्ण आफैमा सबै दृष्टिबाट पूर्ण छ । न पूर्णमा केही घटाउन सकिन्छ, न त पूर्णमा केही बढाउन सकिन्छ । शिष्य पूर्ण होस्, आफैमा पूर्णताका साथ गुरु चरणमा समन्वित होस्, एकाकार होस्– यस्तो क्षण जहाँ पूर्णताका स्थापक, परिचायक गुरुदेव बस्नुभएको हुन्छ**

आफ्ना सबै कुरा बिर्सन पुगिन्छ र एउटा बालसुलभ चंचलता छचल्किन्छ, जहाँ न कतै स्त्रीको भेद रहन्छ, न पुरुषको भेद रहन्छ, न बालकको भेद रहन्छ, न त वृद्धको भेद नै रहन्छ । गुरुदेवको दर्शन मात्रले सयौँ, सयौँ सिद्धिहरू प्राप्त हुन्छन्, जो साध्य अधूरो रहन्छ, उहाँको दर्शनबाट नै प्राप्त हुन्छ र पूर्णता प्राप्त हुन्छ । यस्तो अद्भुत, अमूल्य क्षण केवल सिद्धाश्रममा मात्र होइन, यस धर्तीमा पनि तिमीहरूसँग राख्न चाहन्छु र राख्छु । मेरो तिमीहरूप्रति यस्तै आशीर्वाद छ ।

हाम्रो जीवनमा कुनै विकार छैन, तिमीहरू पश्चात्तापको अग्निमा जल्नु पर्दैन, तिम्रो हृदयमा कुनै न्यूनता छैन, लालच छैन, स्वार्थ छैन, मोह छैन, दुःख छैन, दारिद्र्य छैन । यी त केवल प्रतीक हुन्, यी त केवल चेतना हुन् । दुःख पर्दा हामीलाई महसुस हुन्छ कि धेरै दुःख छ, सुखी छौँ भने पनि अति सुखी छौं जस्तो लाग्दछ । यी त जीवनका भागहरु हुन् जहाँ दुःख पनि आउँछ, वेदना पनि आउँछ । केवल हामीलाई मात्र होइन, सयौँ-सयौँ युगपुरुष र भगवान् राम, कृष्णको जीवनमा पनि आएको थियो । उहाँहरूको चरित्रलाई हेरेर पनि हामीले अनुमान लगाउन सक्दछौँ कि उहाँहरूले भन्दा हामीहरूले अत्यन्तै थोरै दुःख मात्र भोगिरहेका छौँ । रामले जस्तो दुःख सहन हामी सक्दैनौँ– जहाँ पत्नीको वियोग हुन्छ, जहाँ वनबास गएर आफ्नो पिताको मुखसम्म हेर्न पाइन्न र वनमा भट्किनु नै जीवन हुन्छ, जहाँ रावणजस्ता आततायीको नजिक उभिनुपर्छ । रामको जस्तो जीवन हामीले देखेकै छैनौँ । कृष्णको जीवनमा हेर्नुहोस्, उनले मथुराबाट भागेर द्वारिका जानुपर्‍यो, महाभारत युद्धमा उनलाई सयौँ प्रताडना दिइयो, हरक्षण दुःख झेलेर अगाडि बढ्नुपर्ने स्थिति थियो, त्यस प्रकारको दुःख पनि हामीले भोगिरहेका छैनौँ । जहाँ बुद्ध र महावीरलाई किला ठोकिन्छ, ईसा मसीहलाई सूलीमा टाँगिन्छ, सुकरातलाई विष दिएर मारिन्छ त्यति ठूलो दुःख पनि हामीले देखेका छैनौँ । यी दुःख हुँदै होइनन्, यी त तिम्रो जीवनका न्यूनता हुन् । राम, कृष्ण, महावीरहरूको सामु हामीले के दुःख सह्यौँ र ? यति धेरै दुःख सहेपछि राम, कृष्ण आदि युगपुरुष बन्न सके किनकि दुःखको अग्निमा मानिस पाक्दछ, तयार हुन्छ, तृप्त हुन्छ, पूर्णता प्राप्त गर्दछ । सुनलाई जबसम्म आगोमा तताइन्न, जलाइन्न तबसम्म कुन्दन बन्दैन ।

गुरु पूर्णिमा साधना र सिद्धिहरूको दिन हो । यो सफलताको दिन हो । यो यस्तो दिन हो जुन दिन सिद्धि वरमाला लिएर तिम्रो सामु उभिन्छ । तर तिमीले यस कुरालाई महसुस गर्न सक्दैनौ । केवल एक पाइला अगाडि बढाउनु छ, वरमाला घाँटीमा पहिरिनु छ । यो यस्तो दिन हो जहाँ ती साधनाहरूलाई आफ्नो मुठ्ठीमा कसेर समात्नु छ । यो यस्तो दिन हो जहाँ पाँच हजार वर्षसम्म साधना गरेर नपाएको फल तीन दिनमा प्राप्त हुन सक्दछ । यो यस्तो दिन हो जहाँ हामी भोग र मोक्ष जे चाहन्छौँ प्राप्त हुन सक्दछ । दुवै चाहन्छौँ भने पनि दुवै एकै साथ प्राप्त हुन सक्दछ ।

हामी त यसै जीवनमा पूर्णता चाहन्छौं । हामी मुक्त हुन पनि चाहँदैनौं– सयौ प्रकारका बन्धन हाम्रा सामु छैनन् भने पनि गुरु बन्धनबाट त अवश्यै जकडिरहेको होस् भन्ने चाहन्छौं । गुरु हाम्रो हृदयमा रहनुहोस्, रक्तको कणकणमा रहनुहोस्, रगतको कण पनि बाहिर निक्लँदा उसले 'गुरु' शब्द उच्चारण गर्दै रहोस् ।

गुरोपनिषद्का प्रत्येक श्लोकहरू बेग्लाबेग्लै ऋषिहरूबाट लिखित हुन्, प्रणित हुन्, यो पूरा ब्रह्माण्डमा व्याप्त छ । त्यस श्लोकको चारौं हरफमा भनिएको छ– गुरु पूर्णिमा साधारण दिवस होइन, यसलाई दिन भन्न सकिँदैन, यो त कल्पवृक्ष हो, गंगा हो, यो भागीरथी हो, यो कैलाश पर्वत हो, मानसरोवर हो, यो पूर्णरूपमा स्वर्ग हो, यो आफैमा सिद्धाश्रम हो किनकि यो दिन होइन, यसको यस समयमा कुनै रात हुँदैन, यी दिनहरूमा कुनै सूर्य हुँदैन, यो तीन दिनमा जीवनमा कुनै न्यूनता आउँदैन, अनुहारमा विषाद्, दुःखको झलक आउँदैन किनकि यो बालक बन्ने क्रिया हो । फर्केर आफ्नो बालकपनमा आउने, फर्केर त्यही उमङ्गका साथ नयाँ जीवन प्रारम्भ गर्ने दिन हो । जे जस्तो जीवन भोगियो त्यसलाई छोडौं, जुन दुःख भोगियो त्यसलाई पनि छोडौं किनकि तिम्रो शब्दमा तिमीले दुःख भोग्यौ, तिम्रो शब्दमा तिमीले वेदना देख्यौ, अभाव देख्यौ । तर तिमीले त्यति अभाव देखेका छैनौ जति कृष्णले देखेका थिए, रामले देखेका थिए र संसारका श्रेष्ठ युगपुरुषहरूले देखेका थिए । युगपुरुष आरामले सुतेर बनेका थिएनन् । तिमीले जे जस्तो जीवन बितायौ, त्यस जीवनलाई म फिर्ता लिन्छु, त्यस जीवनलाई ममा छाडिदेऊ । आज तिमीलाई नयाँ शिष्य बनाउन चाहन्छु, नयाँ निर्माण गर्न चाहन्छु, नयाँ प्रकारको मनुष्य बनाउन चाहन्छु । जो बित्यो, त्यो बित्यो, जसरी बिताउनुभयो त्यो तिम्रो हातमा थियो, तिम्रो बुबाको हातमा थियो, त्यसलाई यसै स्थानमा छोडिदेऊ । आजबाट मैले नयाँ मानवको निर्माण गर्न गइरहेको छु, तीन दिनभित्र एउटा नयाँ शिष्यको निर्माण ! तिमीभित्र नयाँ चेतना दिइरहेको छु, तिमीभित्र नयाँ भाव दिइरहेको छु, तिमीमा स्फुलिङ्ग दिइरहेको छु, प्रकाश दिइरहेको छु, तिमीलाई अङ्गारजस्तो बनाउन चाहन्छु र बनाइरहेको छु जो गर्विलो पारामा विश्वसामु, समाजसामु उभिन सकोस्, आफ्नो नाम, गुरुको नाम र सिद्धाश्रमको नाम, जीवन्तताको नाम, कृष्णको नाम उत्पन्न गर्न सकोस्, यस्तो बनाउन चाहन्छु ।

वास्तवमा तिमीहरू मेरो सामु छौ, यो मेरो लागि अत्यन्तै प्रसन्नताको कुरा हो । जीवनमा चौबीसै घण्टा प्रसन्नता रहन्छ, आनन्द र मस्ती रहन्छ, वृत्ति र पूर्णता रहन्छ । मेरो लागि विशेष क्षण त्यो हुन्छ जब शिष्यहरु मेरो सामु हुन्छन् । यी मेरा आत्मा हुन्, प्राण हुन्, धड्कन हुन्, मेरा चेतना हुन्, हातपाउ हुन् । मेरो रक्तकणलाई शरीरबाट निकालेर हेर्ने हो भने त्यसमा तपाईंको मूर्ति देख्नुहुनेछ– यो पक्का छ, यसमा मेरो च्यालेन्ज छ । यति प्रेम त बुबाले पनि तिमीहरुलाई गर्नुभएन होला, यति प्रेम त पत्नीबाट पनि तिमीहरुलाई मिलेन होला, यति प्रेम त तिमीहरुको समाज, कुटुम्बबाट सम्भव भएन होला, उनीहरूले भन्दा पनि बढी प्रेम म तिमीहरूलाई गर्दछु । मेरो छाती चिरेर हेर्नुहुन्छ भने तिमीहरुले आफूलाई त्यहाँ पाउनेछौ । यस्तै प्रेम तिमीहरूबाट पनि म चाहन्छु । तिमीहरुको रक्तको कणकणमा गुरु स्थापित हुनुहोस्, गुरुको प्रत्येक क्षण त्यसमा स्थापित होस्, तिम्रो अनुहारमा गुरुको अनुहार होस्, तिम्रो आँखा गुरुको आँखा होस्, तिम्रो हात गुरुको हात होस्, तिम्रो पाउ गुरुको पाउ होस्, तिमीहरुको शरीरमा पूर्णरूपमा गुरु स्थापित हुनुहोस्, यस्तो स्थापन गरेर नै म तिमीहरुलाई नयाँ निर्माणमा अग्रसर गर्न सक्दछु र म निश्चितरूपमा ग्यारेण्टीका साथ यसो गर्छु, कुनै विधाताले यसलाई रोक्न सक्दैन, यो निश्चित छ । ❑

---

♣ **गुरु पूर्णिमा त प्रतीक हो । जो अभागी छ, जसको पाप कर्म उदय भएको छ, जसको दुर्भाग्यले उठ्ने तयारी गरिरहेको छ, ऊ मात्र यस्तो अवसरमा जाँदैन ।** –महर्षि वशिष्ठ

♣ **साधना र साधकको जीवनमा प्रतिवर्ष एउटा मध्यविन्दु उपस्थित हुन्छ जसलाई गुरु पूर्णिमा भनिन्छ । यस विशेष दिनलाई 'अमृत दिवस' भनिन्छ । यस दिन गुरुको सहचर्यले नै साधनामा पूर्णता प्रदान गर्छ ।** –ब्रह्मर्षि विश्वामित्र

♣ **जो मनुष्य भएर पनि पशु छ, उसको जीवनमा गुरु हुँदैनन्, ऊ गृहस्थमा फसेर पशुवत् नै मर्दछ । श्रेष्ठ मनुष्य गुरुमय हुन्छ र यस दिन गुरु चरणमा आफूलाई समर्पित गर्दछ ।** –परमहंस स्वामी अजय देवानन्दजी महाराज

♣ **हजार काम छोडेर पनि गुरु पूर्णिमाको अवसरमा त गुरु चरणमा जानैपर्दछ र आफ्ना सबै थोक उहाँको चरणमा समर्पित गर्नैपर्दछ, यसो गर्ने नै सही अर्थमा शिष्य हुन्छ ।** –योगीश्वर स्वामी अव्यक्तानन्द

# शिष्य त यस्तो हुनुपर्दछ...

शिष्यको अर्थ हो नजिक जानु, शिष्यको अर्थ हो समीपता, निकटता। जो साधक जति बढी गुरुको निकट जान सक्दछ, गुरुको हृदयलाई स्पर्श गर्न सक्दछ, गुरुको हृदयमा स्थापित हुन सक्दछ र पूर्ण समर्पणको भावनाले गुरुसँग एकाकार हुन सक्दछ, उही सही अर्थमा शिष्य हो।

विरोगोपनिषद्मा शिष्यका छ लक्षण बताइएको छ। यसबाट शिष्यले आफैमा पूर्णता प्राप्त गर्न सक्दछ। जो व्यक्ति वा साधक जति गहिराइले यी गुणहरूलाई आफूमा समाहित गर्दछ, ऊ त्यति नै श्रेष्ठ शिष्य बन्न सक्दछ।

विरोगोपनिषद्का अनुसार शिष्यका छ गुण निम्नानुसार छन्–

१. शिष्यको अर्थ समर्पण पनि हो। जो जति गहिराइका साथ गुरूप्रति समर्पित हुन्छ, ऊ त्यति नै श्रेष्ठ शिष्य हुन्छ। समर्पणमा कुनै प्रकारको पनि शर्त रहँदैन। समर्पण बुद्धिप्रधान नभएर भावनाप्रधान हुन्छ। पेशाले तपाईं इन्जीनियर, वकील वा व्यवसायी हुनुहुन्छ, यो बेग्लै कुरा हो तर समर्पणमा यी विशेषताहरूको कुनै योगदान वा आधार हुँदैन। जो सबै विशेषता र पूर्वाग्रहले रहित भएर समर्पित हुन्छ, ऊ नै सही अर्थमा शिष्य बन्ने अधिकारी हुन्छ।

२. शिष्यको व्यक्तिगत कुनै इच्छा वा आकांक्षा हुँदैन। जब ऊ गुरुको सामु हुन्छ तब सरल बालकजस्तै हुन्छ। त्यसबेला ऊ धेरै उच्च अधिकारी हो वा धेरै महान् हो अथवा आर्थिक दृष्टिले धेरै प्रबल र सक्षम छ भन्ने कुराको महत्त्व रहँदैन किनकि गुरुको सामु त शिष्य काँचो माटोजस्तै हुन्छ, त्यसबेला ऊ स्वयंको कुनै आकार हुँदैन। यस्तो स्थितिमा आएपछि मात्र ऊ सही अर्थमा शिष्य हुने अधिकारी हुन्छ। शिष्य बनेपछि पनि उसमा 'मैले धेरै पढे-लेखेको छु, म वकील हुँ वा उद्योगति हुँ' आदि अहंकार छन् भने गुरु र उसमा झीनो आवरण बनिरहन्छ। यसबाट दुवैको पूर्णरूपमा तादात्म्यता रहन पाउँदैन। यसैले सबै विशेषता र उपाधिहरूलाई पर राखेर मात्र शिष्य गुरु सामु उपस्थित होस्। यस्तो हुन सकेमा मात्र परस्पर तादात्म्यता रहन सक्छ।

३. शिष्य आधारभूतरूपमा तर्कप्रधान नभई भावनाप्रधान हुनु आवश्यक छ किनकि तर्क नै पछि गएर कुतर्कका रूपमा परिवर्तित हुन्छ। तपाईंले गुरु पद स्थापित गर्नु भएको छ भने यसबाट यो स्पष्ट हुन्छ कि तपाईंले गुरुलाई आफूलाई भन्दा बढी महत्त्व दिनुभयो। गुरु कुनै एउटा क्षेत्रमा तपाईंभन्दा अनुभवी हुनुहुन्छ भन्ने तपाईंले अनुभव पनि गर्नुभयो। जबसम्म त्यो ज्ञानलाई प्राप्त गर्नुहुन्न तबसम्म तपाईंले उहाँप्रति तर्क गर्नै सक्नुहुन्न। त्यसैले गुरुलाई भावनाबाट नै प्राप्त गर्न सकिन्छ। गुरुले कुनै आज्ञा दिनुहुन्छ भने त्यसमा किन र कसरी भन्ने प्रश्न उठ्न सक्दैन। उहाँको आज्ञा जीवनको सर्वोपरिता हो। त्यस आज्ञाको पालना नै शिष्यको प्रधान र एक मात्र धर्म हो।

४. शिष्य परीक्षक हुन सक्दैन। गुरुको परीक्षा लिने उसलाई कुनै अधिकार छैन। यो कार्य त गुरु बनाउनुभन्दा पहिले गर्न सकिन्छ। तपाईंले जसलाई गुरु बनाउन गइरहनुभएको छ, उहाँको बारेमा राम्रोसँग बुझ्नुहोस्। तपाईं सबै प्रकारले सन्तुष्ट भएपछि मात्र उहाँलाई गुरु बनाउनुहोस्। तर एकपटक गुरु स्थापित गरिसकेपछि भने उहाँको परीक्षा लिन सकिन्न, न आफ्नो तुलना गुरुसँग गर्न नै सकिन्छ, न त आफ्नो गुरुको तुलना अन्य गुरुसँग नै गर्न सकिन्छ। गुरुआज्ञा जीवनको आधार हुनुपर्दछ र आज्ञा पालनमा कुनै प्रकारको व्यवधानले समर्पणको भावनामा न्यूनता ल्याउँछ। यसैले शिष्य बालकजस्तै भएर गुरु सामु उपस्थित होस्।

५. शिष्यको अर्थ निकटता हो। ऊ जति गुरुको नजिक हुन्छ त्यति नै प्राप्त गर्न सक्दछ। आजको व्यस्त जीवनमा शरीरबाटै गुरुको चरणमा बस्न सम्भव छैन। तब चिठ्ठी वा टेलिफोनद्वारा उहाँसँग निकटता बनाएर राख्न सकिन्छ। यदि सम्भव हुन्छ भने वर्षमा चार-पाँचपटक स्वयं उहाँको चरणमा गएर बस्नुपर्दछ। एक वा दुईपटक उहाँको चरणमा उपस्थित हुनुपर्दछ र वर्षको एकपटक भए पनि सपरिवार गुरुको चरणमा बसेर केही प्राप्त गर्नुपर्दछ किनकि गुरु

परिवारका नै एउटा अङ्ग हुनुहुन्छ, परिवारको मुख्य सदस्य हुनुहुन्छ । अतः समय-समयमा उहाँको मार्गदर्शन प्राप्त गर्नु, उहाँबाट केही प्राप्त गर्नु शिष्यको पहिलो धर्म हो । गुरु सामु हामी जाँदैनौं भने उहाँबाट प्राप्ति कसरी हुन्छ ? गुरुसँग लगातार सम्बन्ध बनाइराख्नु र गुरुसँग आफूलाई एकाकार गर्नु नै शिष्यत्व हो ।

६. गुरुआज्ञा नै सर्वोपरि हो । जब तपाईं शिष्य हुनुहुन्छ भने यो गुरुको आज्ञा पालन गर्नु तपाईंको धर्म हो । गुरु आज्ञामा कुनै न कुनै विशेषता अवश्य नै लुकेर रहेको हुन्छ । यो विशेषता त्यसबेला नदेखिएता पनि कालान्तरमा शिष्यले बुझ्न लाल्दछ कि गुरुले दिनुभएको आज्ञा आफ्नै भलाइका लागि थियो ।

यसैले गुरुले जेसुकै आज्ञा दिनु भए पनि त्यसलाई पूरा गर्नु र पालना गर्नु शिष्यको धर्म मात्र नभई कर्तव्य पनि हो । आज्ञा पालनमा कुनै प्रकारको हिचकिचाहट, व्यवधान र आनाकानी हुनुहुन्न । जतिसक्दो चाँडो गुरुआज्ञाको पालना गर्नु शिष्य धर्म हो ।

विरागोपनिषद्का अनुसार जुन शिष्यले यी गुणहरूलाई जीवनमा आत्मसात् गर्दछ, ऊ नै सही अर्थमा शिष्य बन्ने अधिकारी हुन्छ । त्यसैले तपाईंले आफैभित्र नियालेर हेर्नुहोस् । गुरुसित जुन आशा लिएर बस्नुभएको छ, यसका लागि के तपाईं सही अर्थमा शिष्य हुनुहुन्छ ? के तपाईं वास्तवमै शिष्यको कसीमा खरो निक्लनुभएको छ ? यदि तपाईं यस कसीमा अधूरो हुनुहुन्छ भने कसरी गुरुले आफ्ना इच्छाहरू पूरा गरिदिनुहुन्छ भन्ने तपाईंले आशा गर्नुहुन्छ ?

गुरु र शिष्यको सम्बन्ध सीसाजस्तो नाजुक र संवेदनशील हुन्छ । सानो मतिभ्रमले पनि त्यसलाई चर्काइदिन सक्दछ । त्यसैले शिष्यले सदा सावधान भएर आत्मनिरीक्षण गर्नुपर्दछ । म शिष्यको कसीमा उत्तीर्ण छु कि छैन सदा यही चिन्तन रहनुपर्दछ । शास्त्रमा वर्णित शिष्यका गुणहरू आफूमा धारण भइरहेको छ कि छैन भन्ने चिन्तन सदा रहनुपर्दछ । आफू सही अर्थमा शिष्य बन्न सकेको छ वा छैन भन्ने विश्लेषण गर्दै रहनाले हृदय सफा हुन्छ र यसबाट सम्बन्धमा चिसोपन पनि आउन पाउँदैन ।

गुरु र शिष्यको सम्बन्ध व्यापार होइन । गुरु-शिष्य सम्बन्धमा लेनदेनको प्रश्न आउँदैन । मैले यति सेवा गरें, मलाई धेरै उपलब्धि प्राप्त हुनुपर्ने भन्ने भावना हुनुहुँदैन । शिष्यको धर्म त आफ्नो शिष्यत्व बनाइराख्नु हो र निरन्तर शिष्यत्वमा अगाडि बढिरहनु हो ।

सही अर्थमा भन्ने हो भने शिष्यको हृदय शिशुको जस्तै हुनुपर्दछ । जसमा सामाजिक रीति-रिवाजबाट र भोगविलासबाट टाढा रहे पनि समाजप्रति आदर र अपनत्व रहन्छ उसले बाह्य जगत्सित अनासक्त रहेर कर्तव्यपथमा अग्रसर रहेर गुरुद्वारा देखाइएको बाटोबाट संसारको कल्याणको कामना आफ्नो मनमा राख्दै पूर्णता प्राप्त गर्दछ । यस्तो शिष्य विनम्र तथा अहंकाररहित हुन्छ । सच्चा शिष्य उही हो जसले गुरु सामु 'म केही पनि होइन' भन्ने भावना राख्दछ ।

गुरु चरणमा समर्पण तथा गुरुको व्यक्तित्वलाई आफ्नो जीवनमा उतार्ने नै शिष्यको लागि सबैभन्दा ठूलो चुनौतिको विषय हो । यसका लागि शिष्यलाई निरन्तर प्रयत्नशील हुनुपर्दछ । यस्तै नरनारी सच्चा शिष्य कहलिन लायक हुन्छन् जो गुरु चरणमा उपस्थित भएर विभिन्न परिस्थितिको सामना गर्दै अहंकारमाथि विजय प्राप्त गरेर त्यसलाई जीवन र परिवारबीच सन्तुलन बनाएर राख्ने प्रयास गर्दछन् । यस्तै शिष्य आफ्नो पुरुषार्थको बलले अहंबाट मुक्त हुन सक्छ । ऊ गुरुकृपा पाउन मान, सम्मान, धनसम्पत्ति र यसभन्दा पनि अगाडि बढ्छ र जीवनलाई गति दिन्छ । ऊ अझै अघि बढेर जीवनकै बलि दिएर पनि पूर्णता प्राप्त गर्न तत्पर रहन्छ ।

सम्पूर्ण समर्पण तथा आफूलाई अहंकाररहित बनाएर राख्नु नै आध्यात्मिक शक्तिलाई प्राप्त गर्ने पहिलो शर्त हो । यो शक्ति साधना गुरुकृपाबाट मात्र प्राप्त हुन्छ । यस्तो भएपछि मात्र शिष्यले गुरुत्वलाई प्राप्त गर्दछ । यस्तो स्थितिमा पुगेपछि शिष्य स्वयं गुरु बन्दछ । तर अरूले उसलाई गुरु शब्दले सम्बोधन गरे पनि आफ्नो गुरुको अगाडि आफ्नो शिष्यत्वलाई उसले कहिले पनि छोड्दैन । यही उसको कसी हो । यही भावनाको बलमा नै उसले दिव्य शक्तिसँग साक्षात्कार गर्दछ । यसो भएपछि मात्र वास्तवमा ऊ जनजनको सेवा गर्न समर्थ हुन्छ र एउटा उच्चकोटिको शिष्यको उदाहरण समाज सामु राख्न ऊ सफल हुन्छ ।

जय गुरुदेव !

---

♣ **धनको संचय त क्षुद्र मानिसको कार्य हो, गुरु चरणमा धनको त्याग र तन, मन समर्पित गर्नु नै जीवनको उच्चता हो ।** –त्रिजटा अघोरी

♣ **यो पर्व त वर्षमा एकपटक आउँछ, यदि यो अवसर पनि गुम्दछ भने फेरि अर्को वर्ष मात्र यस्तो अवसर आउँछ, अर्को वर्ष के हुन्छ, के ठेगान ?** –स्वामी विशुद्धानन्दजी महाराज

♣ **गुरु पूर्णिमाको अवसरमा गुरुको आशीर्वादले नै वर्षभरि सुख, सम्पत्ति एवं मङ्गल प्रदान गर्दछ ।** –मां आनन्दमयी

# सावर गुरू पूजन

**प्रातः स्मरण**

ब्रह्ममुहूर्तमा उठेर आफ्नो ओछ्यानमा नै बसेर गुरु स्मरण गर्नुहोस्–

**आनन्दमानन्दकरं प्रसन्नं,**
**ज्ञानस्वरुपं निजबोधरुपम्।**
**योगीन्द्रमीडयं भवरोगवैद्यं,**
**श्री मद्‌गुरुं नित्यमहं भजामि।।**

पहिला मानसिकरूपबाट नै देवताहरूको पूजा गर्नुहोस्–

**लं पृथिव्यात्मकं गन्धं समर्पयामि।**
**हं आकाशात्मकं पुष्पं समर्पयामि।**
**यं वाय्वात्मकं धूपम् आघ्रापयामि।**
**रं वह्यात्मकं दीपं दर्शयामि।**
**वं अमृतात्मकं नैवेद्यं निवेदयामि।**
**सं सर्वात्मकं ताम्बूलादि सर्वोपचारान् समर्पयामि।**

**गुरू मण्डल स्मरण**

स्नान गरेर शुद्ध वस्त्र धारण गरी पीतासन वा श्वेत आसनमा पूर्वाभिमुख बस्नुहोस्। आफ्नो अगाडि कुनै पात्रमा गुरु यंत्रलाई स्थापना गर्नुहोस् । निम्न सन्दर्भहरूद्वारा गुरु मण्डललाई स्मरण गर्नुहोस्–

**ॐ नवनाथ गुरुभ्यो नमः।**
**ॐ निखिलेश्वरानन्दाय परम गुरवे नमः।**
**ॐ सच्चिदानन्दाय पारमेष्ठि गुरवे नमः।**
**ॐ दिव्यौघ गुरुं नमामि।**
**ॐ सिद्धौघ गुरुं नमामि।**
**ॐ मानवौघ गुरुं नमामि।**

**ध्यान**

आफ्ना दुवै हात जोडेर गुरुदेवको ध्यान गर्नुहोस्–

**गुरुर्वै सतां देहि मदैव ध्यानं**
**प्रज्ञाप्रदं सिद्धि मदं च ध्यानम्।**
**देवत्व दर्शन मदे भव सिन्धुपारं,**
**गुरुर्वै कृपात्वं गुरुर्वै कृपात्वं।।**

'हे गुरुदेव ! हजूर ब्रह्मा, विष्णु एवं महेशभन्दा पनि अधिक तेजोमय हुनुहुन्छ किनकि हजूर साक्षात् परब्रह्मस्वरूप हुनुहुन्छ, हजूरले नै हामीलाई ध्यान, ज्ञान एवं सिद्धिहरू प्रदान गर्न सक्नुहुन्छ, रूपवान् तथा यौवनवान् बनाउन सक्नुहुन्छ, हामी केवल हजूरको नै शरणमा छौं ।'

**दिशा रक्षण**

बायाँ हातमा पहेँलो सर्स्यूं लिएर त्यसलाई दाहिने हातले ढाक्नुहोस्, त्यसपछि निम्न मन्त्र उच्चारण गरेर यसलाई मन्त्रबद्ध गरेर सम्पूर्ण दिशाहरूमा अलि अलि छर्नुहोस् ।

**ॐ शत्रुनां ज्वल ज्वल प्रज्ज्वल प्रज्ज्वल ह्रीं क्रीं क्रीं ह्रीं भंजय भंजय नाशय नाशय दिशां रक्ष रक्ष मां सिद्धिं देहि देहि फट्।**

**देह रक्षा**

आफ्नो देहको सुरक्षाको लागि कुनै पात्रमा जल लिएर त्यसलाई निम्न मंत्र ७ पटक पढेर अभिमन्त्रित गर्नुहोस् तथा आफ्नो चारैतर्फ सुरक्षा चक्र कोर्नुहोस् ।

**ॐ नमो आदेश गुरु को, वज्र वज्री वज्र किवाड**
**वज्री में बांधा दसों द्वार को घाले,**
**उलट वेद वाही को खात।**
**पहली चौकी गणपति की,**
**दूजी चौकी हनुमन्त जी की,**
**तीजी चौकी भैरों की, चौथी चौकी राय की,**
**रक्षा करने को श्री नृसिंह देव जी आवे, शब्द सांचा पिण्ड कांचा फुरो मंत्र इश्वरी वाचा। सत्यनाथ आदेश गुरु का।**

**आसन**

आसनका लागि केही पुष्प अर्पण गर्नुहोस् तथा निम्न मंत्र पढ्नुहोस्–

**ॐ राम जी नमो सत आदेश, गुरु जी कु आदेश।**
**ॐ गुरु जी अमर जोगी, अमर काया, अमर लोक से उतरी माया, ब्रह्मा विष्णु महेश जाया।**
**श्री गुरु चरणेभ्यो नमः आसनं समर्पयामि।**

**स्नान**

गुरु चरणमा जल अर्पण गर्नुहोस्–

**गंगाक्लिन्न जटा भार सोम सोमार्धशेखर।**
**नद्या मया समानीतैः स्नानं कुरु महेश्वर।**
**श्री गुरु चरणेभ्यो नमः स्नानं समर्पयामि ।**

**गन्ध**

चन्दन अथवा कुंकुम अर्पण गर्नुहोस्–

**नमस्सुगन्धदेहाय ह्यवन्धफलदायिने।**
**तुभ्यं गन्धान् प्रदास्यामि सर्वाज्ञानविभञ्जन।।**
**श्री गुरु चरणेभ्यो नमः गन्धं समर्पयामि।**

**अक्षता**

अक्षता (चामल) अर्पण गर्नुहोस्–

**अक्षतान् धवलान् देव सिद्धगन्धर्व पूजित।**
**सुन्दरेशं नमस्तुभ्यं गृहाण वरदो भव।।**
**श्री गुरु चरणेभ्यो नमः अक्षतान् समर्पयामि।**

**पुष्प**

फूलको मालालाई गुरु चरणमा समर्पित गर्नुहोस्–

तुरीय वन सम्भूत परमानन्द सौरभं।
पुष्पं गृहाण सोमेश पुष्प चाप विभंजन।।
श्री गुरु चरणेभ्यो नमः पुष्प मालां समर्पयामि नमः।

**पाद पूजन**

निम्न मंत्रहरूबाट चामल चढाउनुहोस्–

ॐ भवाय नमः पादौ पूजयामि नमः।
ॐ गुरुभ्यो नमः पादौ पूजयामि नमः।
ॐ परमगुरुभ्यो नमः पादौ पूजयामि नमः।
ॐ परात्पर गुरुभ्यो नमः पादौ पूजयामि नमः।
ॐ पारमेष्ठि गुरुभ्यो नमः पादौ पूजयामि नमः।
ॐ रुद्राय नमः पादौ पूजयामि नमः।
ॐ मृडाय नमः पादौ पूजयामि नमः।
ॐ भवनाशाय नमः पादौ पूजयामि नमः।
ॐ सर्वाज्ञान हराय नमः पादौ पूजयामि नमः।

**धूप**

अगरबत्ती अथवा धूप समर्पित गर्नुहोस्–

धराधर स्त्रितानाथ धूर्जटे धवलाप्रभ।
धूपमाघ्रापयामीश दशांगं गुग्गुलान्वितम्।।
श्री गुरु चरणेभ्यो नमः धूपमाघ्रापयामि।

**दीप**

दीप समर्पित गर्नुहोस्–

साज्यावर्तियुतं दीपं सर्वमंगलकारकम्।
समर्पयामि पश्येदं सोमसूर्याग्निलोचन।।

**नैवेद्य**

निम्न मन्त्रहरू उच्चारण गर्दै भोग लगाउनु होस्–

नैवेद्यं षड्रसोपेतं मिष्ठान्नं च घृतान्वितं।
मधुक्षीरादि संयुक्तं गृहचतां गुरु नायक।।
यस्य स्मरण मात्रेण सफला सन्ति सत्क्रियाः।।
तस्य देवस्य प्रीत्यर्थमिदं ऋतुफलार्पणम्।।
ॐ प्राणाय स्वाहा, ॐ अपानाय स्वाहा, ॐ ब्यानाय स्वाहा,
ॐ उदानाय स्वाहा, ॐ समानाय स्वाहा।

**नीराजन**

ॐ सोमो वा एतस्य राजयमादत्ते। यो राज्यं सन् राज्यो वा सोमेन यजते। देव सुषामेतानि हवींषि भवन्ति, एतावन्तौ वै देवाना सवाः, त एनं पुनः सुवन्ते राज्याय। देवासू राजा भवति।
श्री गुरु चरणेभ्यो नमः नीराजनं समर्पयामि।

**मूल मंत्र**

यस मूल मंत्रलाई २१ पटक पाठ गरौं–

टारनभ्रम अघन की सेना, सतगुरु मुकुति पदारथ देना,
ठाकत दुगदा निरमल करणम् द्वार सुधामुख आपदा हरणम्,
धावत द्वैव हन्हेरी मन की, णासत गुरुभ्रमता सब मन की।
या किरिया सोऊ पिछाना, अद्वैत अखण्ड आप माना,
रम रहया सब में पुरुष अलेखं आद अपार अनाद अभेखम्,
डा डा मिति आतम दरसाना प्रकट के ज्ञान जो तक माना
लवलीन मय आदम पद ऐसे, ज्यूं जल जले भेद कहुं कैसे,
वासुदेव बिन और को
नानक ॐ सोऽहं आतम सोऽहम्।।

**पुष्पाञ्जलि**

दुवै हातमा पुष्प लिएर निम्न मंत्र पढ्नुहोस्–

ॐ परमहंसाय विद्महे महातत्त्वाय
धीमहि तन्नो हंसः प्रचोदयात्।
ॐ महादेवाय विद्महे रुद्र मूर्तये
धीमहि तन्नो रुद्रः प्रचोदयात्।
ॐ गुरुदेवाय विद्महे परमब्रह्माय
धीमहि तन्नो गुरुः प्रचोदयात्।

**नमस्कार**

यसपश्चात् दुवै हात जोडेर गुरु प्रार्थना गर्नुहोस्–

गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः।
गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः।।
ॐ नमः शंभवाय च मयोभवाय च,
नमः शंकराय च मयस्कराय च,
नमः शिवाय च शिवतराय च।
न गुरोरधिकं तत्त्वं न गुरोरधिकं तपः।
तत्त्व ज्ञानं परं नास्ति तस्मै श्री गुरवे नमः।।
नमोऽस्तु गुरवे तस्मै इष्टदेव स्वरुपिणे।।
यस्य वागमृतं हन्ति विषं संसार संज्ञकम्।।

**क्षमा प्रार्थना**

आवाहनं न जानामि न जानामि विसर्जनं।
पूजां चैव न जानामि क्षमस्व परमेश्वर।।
मन्त्रहीनं क्रियाहीनं भक्तिहीनं सुरेश्वर।
यत् पूजितं मयादेव परिपूर्ण तदस्तु मे।।
यदक्षरं पदं भ्रष्टं मात्राहीनं च यद्भवेत्।
तत् सर्व क्षम्यतां देव क्षमस्व परमेश्वर।

**समर्पण**

गुह्याति गुह्य गोप्ता त्वं गृहाण तवार्चनम्।
सिद्धिर्भवतु मे देव त्वत् प्रसादान्महेश्वर।।
ॐ शान्तिः। शान्तिः।। शान्तिः।।।

जय गुरुदेव ।

भन्ने विश्वासमा पलपल व्यतीत गरे र गुरुदेवसँग, दादा गुरुदेवसँग पलपल, हरेक प्रश्वासमा यही प्रार्थना गरिरहे । भोलिपल्टसम्म पनि यही क्रम चलिरह्यो र गुरुदेव समाधिबाट फर्कनुभयो भन्ने सुन्न मन, मस्तिष्क र कान आतुर भइरहे ।

तर त्यो आशाको, विश्वासको सुनौलो संसारमाथि फेरि वज्रपात पर्‍यो, 'गुरुदेवको शरीरको दाह-संस्कार भयो रे' भन्ने खबरसँगै । यो खबरसँगै सम्पूर्ण आशाको, सम्पूर्ण विश्वासको मृत्यु भयो र दिउँसै पनि सारा संसार कालरात्रिसरह अन्धकारमय भयो ।

गुरुदेवको त्यो कदम, त्यो लीला आखिर समाधि नभएर देहत्याग नै रहेछ जसलाई 'महाप्रयाण'को संज्ञा दिइयो ।

अग्निदेव पनि कसरी त्यस्तो निष्ठुर बन्नुभयो ? त्यो दिव्यतम, त्यो सुन्दरतम देहलाई अग्निदेवले कसरी जलाउनुभयो ? देवीदेवताको निवासस्थान, अष्टगन्धको सुगन्धयुक्त त्यो दिव्य देहलाई साधारण मनुष्यसरी अग्निदेवले कसरी खरानीमा परिणत गर्नुभयो ? गुरुत्व सत्ताको व्यवस्थापनभित्र कार्यरत अग्निदेवको पनि त्यो कुनै बाध्यता थियो होला अथवा सौभाग्य थियो होला त्यो कुरा आफ्नो ठाउँमा छ । तर त्यस समय आफ्ना गुरुदेवसँग अगाध प्रेम गर्ने शिष्य-शिष्याको चित्त अग्निदेवसँग धेरै दुख्यो ।

गुरुदेवको देहत्यागको अर्थात् महाप्रयाणको तीतो यथार्थ त शिष्य-शिष्याले स्वीकार गर्नु नै पर्‍यो । तर त्यो सत्यसँगै एउटा अहम् प्रश्नचिह्न जन्मियो 'गुरुदेवले यति छिट्टै महाप्रयाण किन लिनुभयो ?'

सद्गुरुदेवको कदमको, उहाँको इशाराको, उहाँको दूरदर्शीताको अर्थ बुझ्न सक्ने सामर्थ्य त साधारण मनुष्य दिमागमा हुने कुरा नै भएन । फेरि वेदना र चोटले छट्पटाइरहेका मन-मस्तिष्कले ती सबै कुरा सोच्ने र बुझ्ने पनि कसरी ? शिष्यहरूमाझ चारैतर्फ निस्तब्धता र शोक छाइरह्यो, आँसुको अविरल धारा बगिरह्यो ।

गुरुदेवको उद्गार– 'गुरु भनेको शरीर होइन'को सम्झना पनि समय समयमा आइरह्यो । तर पनि गुरुदेवको सशरीर उपस्थितिको, गुरु सामीप्यताको, प्रवचन र आदर्श निर्देशनको बानी परिररहेको त्यस समयमा गुरुको सूक्ष्म उपस्थितिमा मात्र चित्त बुझाउनु धेरै कठिन भयो ।

गुरुदेवको त्यो दिव्यतम देह, सेतो धोती कुर्तामा जगमगाइरहने

# गुरुदेवको महाप्रयाण र शिष्यहरूको महाप्रण

'गुरुदेवले शरीर छाड्नुभयो रे', यो खबर नेपाल, भारतलगायत अन्य धेरै मुलुकका शिष्यहरूमाझ अकस्मात् प्रसारित भयो– बिजुली चम्केसरी । दिन थियो जुलाई ३ तारीख, १९९८ तदनुसार आषाढ १९, २०५५ साल । यो कुरा सुनेर कति शिष्य ढले, कति अनियन्त्रितरूपमा रोइकराइ गर्न थाले र कति यस कुरालाई पत्याउन तयारै भएनन् ।

पत्याउने पनि कसरी ? जसको हातमा सम्पूर्ण समयचक्र छ, जसको अगाडि काल नृत्य गर्दछ उहाँले शरीर छाड्नुभयो रे, त्यो पनि यति छिट्टै । त्योभन्दा पनि प्रमुख कुरा गुरुदेवको अवतरण त आध्यात्मिक युग स्थापनार्थ थियो, अहिले त आध्यात्मिक युग आएकै छैन, धर्तीबासीले गुरुदेवलाई चिनेकै छैनन्, त्यसैले अहिल्यै गुरुदेवले शरीर छाड्ने कुरा नै हुँदैन, यो त सम्भव नै छैन । त्यसैले उहाँले शरीर छाड्नुभयो भन्ने कुरा अवश्य नै झूट हो, भ्रम हो, अथवा उहाँको कुनै लीला हो, अथवा उहाँ समाधिमा जानुभएको हो र अवश्य नै उहाँ समाधिबाट फर्कनुहुनेछ ।

जुलाई ३ तारीखको त्यो दिन कति शिष्य भावनाको अतिरेकमा यही विश्वासमा बसे । गुरुदेव समाधिबाट फर्कनुहुनेछ

त्यो सुन्दरस्वरूप, त्यो सिंहवत् चाल, मौन रहेर पनि अनेकौं कुरा बताइरहने ती गहिरा नेत्र, हृदय चिरेर भित्रभित्रै पुग्ने त्यो असाधारण आवाज, शिष्यहरूमाथि पलपल करुणा बर्साइरहने त्यो जीवन्त उपस्थिति फेरि शिष्य-शिष्याले आफ्नो अगाडि नपाउने भए । अब त्यो सुन्दर स्वरूप फोटोमा सीमित हुने भयो, अब त्यो सशरीर उपस्थिति केवल इतिहास बन्ने भयो । कहाँ गएर देख्न पाउने गुरुदेवको त्यो सुन्दर मुहारलाई, कहाँ गएर सुन्न पाउने त्यो दिव्य वाणीलाई ?

प्रकृति पनि विचित्रकी छिन् । शिष्यहरूमाथि यति ठूलो चोट परेको छ, धर्तीमाताले त्यस्तो असाधारण व्यक्तित्वलाई गुमाउनु परेको छ, तर पनि सूर्य आफ्नो समयमा नै उदाइरहेका छन्, चन्द्र आफ्नो समयमा नै देखा परिरहेका छन्, पवन त्यसरी नै बहिरहेका छन्, नदीहरू त्यसरी नै बगिरहेका छन्, फूलहरू पहिले जसरी नै फुलिरहेका छन् । धर्तीमा यत्रो हलचल भएर पनि प्रकृतिमा किन कुनै परिवर्तन भएन ? प्रकृति पनि किन यस्तो निष्ठुरी ?

आजको विराट् सिद्धाश्रम शक्ति केन्द्र नेपाललाई जन्म दिलाउने पुतलीसडकको सानो आश्रम त्यतिखेर भर्खरै खुलेको थियो, मंसिर ५, २०५४ सालमा । यी सबै विह्वलता, भावना र शोक-संतप्तता त्यतिखेरका शिष्य-शिष्याका हुन् । गुरुदेवको चिन्तन विस्तार गर्नलाई, विश्वसामु गुरुदेवलाई चिनाउनलाई आश्रम खोलिएको, तर जसको लागि आश्रम खोलिएको हो उहाँ नै सशरीर रहनुभएन । अब के गर्ने, कसो गर्ने, चारैतर्फ अन्यौल छायो ।

आश्रममा जुठो बारियो । गुरु आश्रममा गुरुको नै जुठो बार्नुपर्ने कस्तो विडम्बना ! १३ दिनसम्म नित्य आरती, धूपदीप, पूजापाठ, दर्शन सबै रोकियो, केवल अखण्डरूपमा एउटा दीयो बालियो, गुरुदेवको तस्वीर अगाडि । साधारण मानिसहरूको जस्तै गुरुदेवको पनि जुठो बार्नुपरेको, छोइछाई गर्नुपरेको कुरा पनि त्यतिखेरका शिष्य-शिष्याहरूमाथि हृदयविदारक रह्यो । गुरुदेवको जुठो बार्न गरिएका प्रत्येक क्रम, उपक्रमले गुरुदेवको अनुपस्थितिलाई चिच्याई-चिच्याई बताइरहेका थिए जुन कुरा स्वीकार्न हृदय तयार नै थिएन । त्यतिखेर यस्तो लाग्दथ्यो कि गुरुदेवको जुठो बार्न गरिएका प्रत्येक क्रमहरूलाई तोडिदिऊँ, सबै छातछुत गरिदिऊँ र चिच्याई चिच्याई भनूँ 'गुरुदेव हुनुहुन्छ, पलपलमा हुनुहुन्छ, कणकणमा हुनुहुन्छ, आफ्ना प्रत्येक शिष्यका साथ हुनुहुन्छ ।'

गुरुदेवका संसारभरिका शिष्य-शिष्याहरूमाथि त्यस समय जुन आघात पऱ्यो त्यसको अभिव्यक्ति शब्दमा हुन असम्भव छ । त्यस समय पुतलीसडक आश्रमका शिष्यशिष्याको स्थिति अत्यन्त दयनीय थियो । आश्रममा जम्मा भएर चुपचाप एक अर्काको मुख हेरेर बस्नु र आँखाबाट आँसु झार्नु सिवाय अरू कुनै कार्य भएन । त्यतिखेरका सबै शिष्य-शिष्याहरूमा आफ्नो गुरुदेवलाई समाजले, संसारले नचिनेको कुराको पीडा थियो र यही पीडाले नै त्यो आश्रम खुलेको थियो । गुरुदेव स्वयं ब्रह्म हुनुहुन्छ, विश्वब्रह्माण्डका अधिपति हुनुहन्छ र उहाँको अनुसार चल्नुमा नै सम्पूर्ण मानवताको कल्याण छ भन्ने यथार्थ सम्पूर्ण धर्तीबासीलाई गुरुदेवको सशरीर उपस्थितिमा बुझाउने शिष्यहरूको सपना केवल सपना रहने भयो । गुरुदेवको आश्रमलाई कसरी अगाडि बढाउने, कसरी कार्य गर्ने भन्ने कुराको ठूलो चिन्ता रह्यो ।

आफूमाथि परेको वज्रपात एकातर्फ, आश्रमको चिन्ता अर्कोतर्फ त छँदै थियो । अझ त्यो गहिरो घाउमा नूनचूक छर्ने काम समाजले गऱ्यो । 'तिमीहरू जसका पछि लागेका थियौ उहाँ नै नरहनु भएपछि अब तिमीहरूले के गर्छौं, कसरी आश्रम चलाउछौ' भन्ने भनाइ र कटाक्ष समाजले पोखिरह्यो । त्यतिखेर शिष्य-शिष्याहरूको आश्रमसँगको आबद्धता घर-परिवारमा चित्त बुझेको थिएन । खालि 'गुरु' 'गुरु' भन्ने, यस्तो आधुनिक युगमा पनि मंत्रतंत्रको कुरा गर्ने, पहेँलो चादर ओढ्ने र आफनो पढाइ लेखाइमा, पैसा कमाउने कार्यमा दिनुपर्ने समय आश्रममा बर्बाद गर्ने भन्ने विरोधी भाव समाज र घर-परिवार सबैतर्फ थियो । त्यसैले गुरुदेवको अनुपस्थितिपछि त आश्रम बन्द गर्लान्, यिनीहरु अब सुध्रिएलान् भन्ने कटाक्षको वर्षात् भइरह्यो ।

त्यस समयमा, त्यो परिस्थितिमा कताकता गुरुदेवसँग पनि चित्त दुख्यो । गुरुदेवको शिष्य प्रेम त जगजाहिर छ । शिष्यहरूलाई अति नै माया गर्ने गुरुदेव कसरी त्यस्तो निष्ठुरी बन्नुभयो ? आफ्ना बालबच्चाहरूलाई यस्तो हालतमा छाडेर उहाँ कसरी जानुभयो ? विश्वलाई आफूलाई चिन्ने मौका नै नदिई उहाँले किन यति छिटो महाप्रयाण लिनुभयो ? यस्ता प्रश्नहरूले मन आक्रान्त भइरह्यो । तर जुन हृदयमा प्रेमको अविरल गंगा बहन्छिन् त्यो हृदयमा चित्त दु:खाइको स्थान धेरै समयसम्म कहाँ रहन सक्छ र !

गुरुदेवले शरीर छाड्नु भएको ४, ५ दिनसम्म यही भावविह्वलता र वेदनाको सम्राज्य रह्यो । कुनै जोश, उत्साह बाँकी रहेन । जीवनप्रतिको कुनै मोह बाँकी रहेन । यो जन्म, यो जीवन सबै नै गुरुको लागि हो, तर गुरु नै नभएपछि जीवनको के औचित्य ? आफ्नो गुरुको शारीरिक विछोडमा दु:खी शिष्य-शिष्याहरूको चारैतिर अन्धकार, अन्यौल र पीडा छाइरह्यो ।

शिष्यप्रेमी गुरुदेवको दृष्टिबाट त ती कुनै पनि कुरा र दृश्य लुकेका थिएनन् । यत्तिकैमा ती शिष्य-शिष्याहरूलाई गुरु आदेश (सूक्ष्म आदेश) प्राप्त भयो जुन यसप्रकारको थियो– "**आफ्ना शिष्यहरूलाई माथि उठाउन नै मैले शरीर छाडेको हुँ । चिन्ता नगर्नू । शोकलाई शक्तिमा बदल्नू ।**"

यो गुरु आदेशसँगै जुन अथाह ऊर्जा र शक्ति प्राप्ति भयो त्यो अवर्णनीय छ । मर्न लागेको देहले प्राण पायो । त्यसपछि शिष्य-शिष्याहरूमा शक्ति भरिँदै गयो । उहाँको महाप्रयाणप्रतिको दृष्टिकोण बदलिँदै गयो । शोकको स्थान शक्तिले लिँदै गयो । शिष्यहरूको उत्थानको लागि नै गुरुदेवले शरीर छाड्नुभएको

हो, त्यसैले अब अघि बढेर आफ्नो गुरुदेवले आरम्भ गर्नुभएको कार्यलाई पूर्णता दिनु शिष्यको कर्तव्य हो, आफ्ना गुरुदेवलाई संसारसामु चिनाउने दायित्व शिष्यको हो । मर्नु त कायरता हो, निष्क्रिय बन्नु त पलायन हो र शोकमा डुबेर आँसु बगाइरहनु कमजोरी हो ।

यी सकारात्मक भावको प्रसारसँगै फेरि गुरुदेवको उद्‌गारको पनि सम्झना आयो– 'मेरा शिष्यहरूको माध्यमबाट नै यस धर्तीमा आध्यात्मिक युग आउनेछ ।' तसर्थ गुरुदेवले छिट्टै शरीर छाड्ने र बाँकी काम आफ्नो शिष्यहरूको माध्यमबाट गर्ने कुरा त सुनियोजित थियो, विधाताको विधिमा अंकित भइसकेको थियो । त्यही सुनियोजित योजनाअनुरूप गुरुदेवले शरीर छाड्नुभएको रहेछ भन्ने भाव आउँदै गयो ।

यी सबै कुराको चिन्तनसँगै गुरुदेवप्रतिको प्रेम, भावभक्ति झन्झन् बढ्दै गयो, गुरु र शिष्यको सम्बन्ध झन् नजिकिँदै गयो । आफ्ना शिष्यहरूमाथि विश्वास गरेर शिष्यहरूको काँधमा जुन जिम्मेवारी गुरुदेवले दिनुभएको छ त्यो शिष्यहरूले हर हालतमा पूरा गर्नुपर्नेछ । गुरुकार्य गर्नु, गुरु योजनालाई अघि बढाउनु र विश्वमाझ नै आफ्ना गुरुदेवलाई चिनाउनु नै अबदेखि जीवनको एक मात्र उद्देश्य, लक्ष्य र ध्येय हुनेछ र यस मार्गमा जतिसुकै दुःख, समस्या झेल्नुपरे पनि, जस्तोसुकै आँधीहुरीको सामना गर्नुपरे पनि पछि हट्ने छैनौं भन्ने भाव ती शिष्य-शिष्यामा प्रगाढ हुँदै गयो ।

गुरुदेवको महाप्रयाणको दिनदेखि १३ दिनसम्मको स्थिति यसरी गुज्रियो र १३ दिन हुँदासम्म शोक शक्तिमा परिणत भइसकेको थियो । पशुपतिको रुद्र गाढेश्वर आश्रममा गुरुदेवको १३ दिनको श्रद्धाञ्जली कार्यक्रम सम्पन्न भयो । त्यस कार्यक्रम सम्पन्न गर्न र प्रसादको व्यवस्था गर्न आश्रमसँग न त पैसा थियो, न त कुनै भौतिक पूर्वाधार थियो, न त सहयोग गर्न सक्ने साधक साधिका नै थिए । उक्त कार्यक्रममा पशुपति क्षेत्रमा अवस्थित अन्नपूर्ण भण्डार आश्रमका पशुपति बाबाले आश्रमको तर्फबाट प्रसाद व्यवस्थापनको साथै अन्य सहयोग गरिदिनुभयो । उहाँको त्यो सहयोग सधैँ नै अविस्मरणीय रहनेछ ।

महाप्रयाण लिनुभन्दा अघिदेखि नै गुरुदेवले आश्रमले उहाँको साथै परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथलाई पनि मान्नुपर्ने निर्देशन भित्रीरूपमा दिइरहनुभएको थियो । त्यही निर्देशनअनुरूप अगाडिको टेबुलमा उहाँको साथै गुरु गोरखनाथको एउटा सानो फोटो पनि राखिसकिएको थियो । गुरुदेवले चारैतिर छरिएका आफ्ना शिष्यहरूलाई जम्मा गरेर उनीहरूको माध्यमबाट आश्रम खोल्नुभयो, गुरु गोरखनाथलाई पनि मान्न निर्देशित गर्नुभयो र महाप्रयाण लिनुभयो, आफ्नो निखिलेश्वर स्वरूपमा जानुभयो । शायद सबै नै सुनियोजित थियो, सबै नै गुरु लीला थियो, दुवै सद्‌गुरुदेवहरुलाई, दुवै दिव्यतम महायोगीहरुलाई सूक्ष्मरुपमा नै मान्नुपर्ने विधाताको विधान थियो ।

शिष्यशिष्याहरु गुरुप्रतिको अथाह प्रेम र भक्तिमा डुब्दै गुरुकार्यमा सरीक हुँदै गए । गुरुकार्यको मार्गमा आएका अनगिन्ती समस्या, बाधा र चुनौतीहरुको सामना गर्ने बल पनि गुरुदेवले नै प्रदान गर्नुभयो । यसै सिलसिलामा आश्रम २०५५ सालको अन्ततिर पुतलीसडकबाट कमलादीमा सर्‍यो । महाप्रयाणको नौ महिना पछि २०५६ साल वैशाख ८ गते, अप्रिल २१ तारीखको दिव्यतम दिनमा त्यो सानो आश्रमले सिद्धाश्रम शक्ति केन्द्रको संस्थागत स्वरूप प्राप्त गर्‍यो । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज र श्री श्री महायोगी गुरु गोरखनाथलाई गुरु रूपमा धारण गरेर उहाँहरूको सूक्ष्म आदेश निर्देशनअनुरूप अघि बढ्ने सौभाग्य आश्रमले प्राप्त गर्‍यो, आध्यात्मिक युग अर्थात् गोरक्ष निखिल युगको स्थापनाको लागि अग्रणी भूमिका निर्वाह गर्ने सौभाग्य सिद्धाश्रम शक्ति केन्द्रले प्राप्त गर्‍यो ।

त्यसपछि सिद्धाश्रम शक्ति केन्द्र निरन्तररूपमा गुरु आदेशअनुरूप आफ्नो लक्ष्य र गन्तव्यतर्फ गतिशील हुँदै गयो, गुरुकार्यमा रातदिन खट्ने र आफ्ना गुरुहरुको योजना साकार पार्नका लागि आफ्नो जीवन नै उत्सर्ग गर्ने शिष्यशिष्याहरुको जमात दिनानुदिन बढ्दै गयो । सद्‌गुरुदेवद्वयको कृपा, आशीर्वादस्वरूप दिन दुई गुना रात चौगुनाको रूपमा संस्थाको विकास र विस्तार हुँदै गयो ।

समयचक्रको गतिशीलतासँगै यी सबै घटना, परिघटना एघार वर्ष पर पुगिसकेका छन् । २०६६ साल आषाढ १९ गते सिद्धाश्रम शक्ति केन्द्रले एघारौं महाप्रयाण दिवस मनाउँदैछ । प्रत्येक महाप्रयाण दिवसले गुरुदेवको महाप्रयाणको समयमा भएको अतुलनीय चोट र अपरिमित पीडाको स्मरण गराउँदछ । त्यस्तो चोट सहेर पनि, त्यस्तो मार खाएर पनि शिष्यशिष्या जीवित नै छन् केवल एउटै कारणले कि शिष्यधर्म निभाउनु छ, आफ्नो गुरुदेवले सशरीर शुभारम्भ गर्नुभएको अभियानलाई पूर्णता दिनु छ । प्रत्येक महाप्रयाण दिवसले गुरुदेवले शिष्यहरुको काँधमा दिनुभएको जिम्मेवारीको बोध गराउँदछ, आफ्ना शिष्यहरुमाथिको गुरुदेवको अथाह प्रेम र अतुल विश्वासको स्मरण गराउँदछ अनि स्मरण गराउँदछ त्यो अविस्मरणिय गुरु आदेशको– **"शोकलाई शक्तिमा बदल्नू"** ।

तसर्थ महाप्रयाण दिवस शक्तिपर्व हो, शोक पर्व होइन । यसर्थ शिष्यशिष्याले आँसु बगाउने र कमजोर हुने होइन कि जाग्ने र आफूभित्रको शक्तिलाई जगाउने दिव्य पर्व महाप्रयाण दिवस हो । गुरुदेवले आफूमाथि दिनुभएको जिम्मेवारीको बोध गर्ने र 'गुरुहरूको योजनाको लागि जीवन नै समर्पित गर्छु' भन्ने प्रण प्रत्येक शिष्यले गर्ने महापर्व 'महाप्रयाण दिवस' हो ।

एघारौं महाप्रयाण दिवसको यो पावनतम अवसरमा सिद्धाश्रम शक्ति केन्द्र नेपाल यही **महाप्रण** आफ्ना परमप्रिय सद्‌गुरुदेवहरूको चरणकमलमा अर्पण गर्दछ । जय गुरुदेव !

# म तिमीहरूबाट टाढा भएकै कहाँ छु र...

**परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूले आफ्नो महाप्रयाणपछिको गुरू पूर्णिमाको लागि शिष्यहरुको नाममा अग्रिमरुपमा लेखेर राख्नुभएको पत्र यहाँ प्रस्तुत छ। गुरुदेवले आफूलाई आफ्नो महाप्रयाणपछि पनि शिष्यहरूकै माझ भएको रहस्यलाई यस पत्रमार्फत उजागर गर्नुभएको छ। हृदयस्पर्शी यो पत्र सन् १९९९ जुलाईको मंत्र तंत्र यंत्र विज्ञानबाट यहाँ उद्धृत गरिएको छ।)**

मेरा परम आत्मीय पुत्रहरु,

मलाई आफ्नो माझमा नपाएर तिमीहरु किन निराश हुन्छौ ? म त अझै पनि तिमीहरुको माझमै छु। तिमीहरुले आफ्नो मुटुको आवाजलाई ध्यान दिएर सुनेनौ ?

सायद सुन्न सकिरहेका छैनौ, र मलाई थाहा थियो एक दिन यस्तो स्थिति आउनेछ भनेर । त्यसैले आउँदो गुरु पूर्णिमामा पत्रिकामार्फत शिष्यहरुलाई सन्देश दिन सकियोस् भनेर यो चिट्ठी मैले पहिले नै लेखेर राखेको हुँ। तर म तिमीहरुबाट टाढा भएकै कहाँ छु र ? तिमीहरुलाई लाग्न सक्छ म गइसकेको छु । 'वास्तवमा नै गुरुदेव गइसक्नुभएको छ त ?' भनेर एकपटक फेरि आफ्नो हृदयमा नियालेर हेर, हृदयलाई सोधेर हेर । तिमीहरुको हृदयले कुनै पनि हालतमा म गइसकेको छु भन्ने कुरालाई मान्न सक्तैन किनकि त्यस हृदयमा प्राण भर्ने म नै हुँ, मैले आफ्नै रक्तकणबाट त्यसलाई सिँचेको छु । त्यसैले त्यसबाट यस्तो आवाज आउन पनि कसरी सक्छ र ?

जसलाई तिमीहरुले आफ्नो सम्झिरहेका छौ, त्यो शरीर त तिमीहरुको हुँदै होइन । जब तिमीहरु छँदैछैनौ भने तिमीहरुको जुन यो शरीर छ, तिमीहरुको आँखामा छलछलाएका जुन अश्रुकण छन्, ती म होइनन् भने अरु को हुन् त ? म तिमीहरुभित्रै बसेको छु । यो कुरा तिमीहरुले बुझ्न सक्दैनौ । कहिलेकाहीँ बुझ्दछौ पनि । तर अरुले भने तिमीहरुभित्र केही न केही विशेष पक्कै छ भन्ने कुरा अवश्यै बुझ्दछन्, अनुभव गर्दछन्, र तिमीहरुभित्रको त्यो विशेष म नै त हुँ ।

अहिले पनि मेरा प्रशस्त कार्यहरु बाँकी छन् । त्यसैले त आफ्नो रगतले तिमीहरुलाई सिँचन गरेको छु तिमीहरु सबैलाई साँचेर आफ्नो तपस्यालाई तिमीहरुभित्र भरेको छु त्यसैले शेष कार्यहरुलाई तिमीहरुले नै पूर्णता दिनुपर्नेछ । मेरो कार्यलाई मेरा मानसपुत्रहरुले नै परिणाम दिन सक्दछन्, अरु कसमा त्यो पात्रता छ ? अरु कसैमा त्यो सामर्थ्य हुन पनि सक्तैन किनकि त्यो योग्यता मैले अरुलाई दिएको पनि त छैन ।

नित्य लीला विहारिणीको एउटा कार्य मबाट सम्पन्न हुनु थियो । यसैले देहको अवलम्बन लिएर म उपस्थित भएँ तिमीहरुमाझ, र कारण थियो– तिमीहरुको निर्माण! जब मलाई आफ्ना मानसपुत्रहरुलाई ऊर्जा प्रदान गरिदिएँ चेतना प्रदान गरिदिएँ यिनीहरुलाई तयार पारिदिएँ भन्ने विश्वास भयो, तब मेरो कार्यको त्यो भाग समाप्त भयो । तर अहिले पनि मेरा अवशिष्ट कार्यहरुलाई पूर्णता प्राप्त भएको छैन, ती सबै मैले तिमीहरुको बलियो काँधमाथि सुम्पेको छु । अब तिमीहरुले कुन कार्य गर्नुपर्ने छ, कसरी गर्नुपर्ने छ, त्यसको संकेत तिमीहरुलाई प्राप्त भइरहने छ ।

तिमीहरुले त प्रचण्ड अग्निको ज्वाला बनेर समाजमा व्याप्त अविश्वास, अज्ञानता, कुतर्क, पाखण्ड, ढोंग र

मिथ्या अहंकारको खाण्डव वनलाई जलाएर खरानी बनाउनु पर्नेछ । उनीहरुमध्ये कोही ज्ञानका पिपासु पनि होलान्, सज्जन पनि होलान्, कोही कष्टले ग्रस्त भएका पनि हुनसक्छन् । यदि उनीहरुमा हृदय छ र हृदयको भाषालाई बुझ्दछन् भने यस्ता व्यक्तिमाथि प्रेम बनेर पनि तिमीहरु बर्षिनू र गुरुदेवको सन्देश दिएर उनीहरुलाई पनि प्रेमको मेघ बनाउनू ।

फेरि त्यो दिन टाढा हुने छैन जब यस धर्तीमा प्रेमको बादल बर्षिनेछ, र त्यस जलकणबाट जुन बिरुवा हुर्किनेछ, त्यसको हरियालीबाट भारतवर्ष झुम्नेछ, हिमालयको एउटा सानो भू-भाग मात्र होइन, पूरा विश्व नै सिद्धाश्रम बन्न सक्नेछ ।

कसले भन्छ यो सम्भव छैन भनेर ? एक्लो मेघखण्डले यो गर्न नसक्ला, सम्पूर्ण धर्तीलाई आफ्नो पावन वर्षाबाट एक्लो मेघखण्डले सिँच्न नसक्ला तर जब तिमीहरु सबै मेघखण्ड बनेर एकैपटक उड्नेछौ तब प्रचण्ड घामले धर्ती डढिरहेको स्थानमा बर्षिन्छौ भने त्यहाँको मौसम बदलिनेछ ।

'अल्फांसो' उत्तम कोटिको आँप हो । यसलाई विदेशमा निर्यात गरिन्छ । यसै आँपबाट विदेशमा भारतको छवि बन्दछ । तिमीहरु पनि मैले बनाएका उत्तम कोटिका शिष्यहरु हौ, तिमीहरुले पनि मेरो प्रतिनिधि बनेर फैलनु पर्नेछ र मेरो सुगन्धलाई फैलाउनु पर्नेछ, तिमीले महसुस गरेको त्यस गन्धबाट सुवासित गरिदिनु पर्नेछ पूरै विश्वलाई ।

गुरु नानक एउटा गाउँमा जाँदा त्यस गाउँका मानिसहरुले उनको अत्यन्तै सेवा सत्कार गरे । जब उनी गाउँबाट हिँड्न लागे, गाउँलेहरु उनलाई विदाइ गर्न भेला भए । उनीहरु सबै गुरुको अगाडि हात जोडी शिर झुकाएर उभिए । नानकले भने– 'तपाईंहरु सबै अत्यन्तै गुणी र उपकारी हुनुहुन्छ, त्यसैले तपाईंहरुको गाउँलगायत सबै उजाड होस् ।'

यसप्रकार आशीर्वाद दिएर नानक अगाडि बढे र अर्को गाउँमा पुगे । त्यस गाउँका मानिसहरुले गुरु नानकसँग राम्रो व्यवहार गरेनन् । नानकले त्यहाँबाट जाने बेलामा गाउँलेहरुलाई आशीर्वाद दिँदै भने– 'तपाईंहरुको गाउँसँगसँगै तपाईंहरु सदा यथावत् रहनुहोस् ।' नानकका मरवाना नामक सेवकले सोधे– 'हजूरले राम्रा मानिसहरुलाई नराम्रो र नराम्रा मानिसहरुलाई राम्रो आशीर्वाद दिनुभयो, यस्तो किन होला गुरुदेव ?'

नानकले मुस्कुराएर भने– 'तिमीले यस कुरालाई बुझेनौ । सुन, जो मानिसहरु नराम्रा छन् उनीहरु एउटै ठाउँमा अल्झिएर बसेको राम्रो हो जसको फलस्वरुप उनीहरुको व्यवहारबाट अरुलाई हानी पुग्न नसकोस् । तर जो राम्रा छन् उनीहरु एक ठाउँमा मात्र सीमित भएर बस्नु हुँदैन । उनीहरु सबैतिर फैलनुपर्दछ जसबाट उनीहरुका गुण र आदर्श अरुले पनि सिकेर अपनाउन सकून् ।'

त्यसैले म भनिरहेको छु तिमीहरु एउटै ठाउँमा बसिरहनु हुँदैन, तिमीहरुले त गतिशील हुनुपर्दछ– कलकल बगेको नदीजस्तै, जसबाट तिमीहरुको जलबाट अरुले पनि प्यास मेट्न सकून् किनकि त्यो जल तिमीहरुको होइन, त्यो त मैले दिएको हुँ । त्यसैले तिमीहरुलाई फैलनु छ, पूरै विश्वमा ।

र नित्य कार्यलाई एकातिर पन्छाएर प्रातःकाल घरबाट खाली हात निस्क, हातमा दस-बीसवटा पत्रिका लिएर । जब ती पत्रिकाहरुलाई कुनै सुपात्रको हातमा अर्पित गरी सद्गुरुदेव र उहाँको यस ज्ञानलाई उसले अवश्यै सम्मान गर्नेछ भन्ने तिमीलाई लाग्दछ, त्यसपछि मात्र तिमीहरु घर फर्कनू ।

तब हेर्नू कसरी सद्गुरुदेवको कृपा बर्सन्छ । तिमीहरु त्यसमा यति धेरै भिज्दछौ कि तिमीहरुलाई आफ्नो पनि ख्याल रहने छैन । एकपटक आफूभित्र आँधीबेहरी ल्याएर त हेर । एकपटक गुरुदेवको हात बनेर त हेर । फेरि तिमीहरुलाई केही गर्नुपर्ने केही हुने छैन । सबै कुरा स्वतः नै हुँदै जानेछ । तर पहिलो पाइला त तिमीहरुले चाल्नै पर्नेछ, एकपटक प्रयास त गर्नै पर्नेछ । बुद्धका श्रमणहरु विश्वभर फैलेजस्तै घरको बन्द ढोकाबाट बाहिर निस्केर समाजमा तिमीहरु फैलनू ।

अनि हेर्नू कसरी गुरुदेवको वरद हस्त तिमीहरुको शिरमा अनुभव हुन्छ । तिमीहरु साना समस्याहरुबाट डराउनु पर्दैन, आत्तिनु पर्दैन । समुद्रमा अहिले यति धेरै पानी छैन जसले निखिलेश्वरानन्दका शिष्यहरुलाई डुबाउन सकोस् किनकि तिमीहरुको पछाडि म जहिले पनि उभिएको छु र उभिएको हुनेछु ।

तिमीहरु मसँग न कहिल्यै अलग थियौ, न कहिल्यै अलग हुन नै सक्दछौ । दीयोको ज्वालाबाट प्रकाशलाई अलग गर्न सकिँदैन, न त सूर्यको किरणलाई सूर्यबाट

नै अलग गर्न सकिन्छ । तिमीहरु त मेरा किरण हौ, मेरो प्रकाश हौ, मेरो सृजन हौ, मेरा कृति हौ, मेरो कल्पना हौ, तिमीहरुबाट म कसरी अलग हुन सक्छु ?

'तिमीहरु पनि त' (जुलाई-९८ को मंत्र-तंत्र-यंत्रको अंकमा मैले तिमीहरुलाई चिट्ठी लेखेको थिएँ जसको शीर्षक यही थियो । तर अहिले 'तिमीहरु पनि त' होइन 'तिमीहरु नै त' मेरा हात पाखुरा हौ, फेरि कसले भन्न सक्छ म शरीररुपमा उपस्थित भएको छैन भनेर । म त अहिले पहिलेभन्दा पनि धेरै उपस्थित भएको छु । मेरो तिमीहरुसँग कति अटुट सम्बन्ध छ भन्ने कुराको महसुस अहिले तिमीहरुलाई भएको छैन किनकि मैले नै महसुस हुन दिएको छैन ।

तर त्यो दिन पनि अवश्यै आउनेछ, जब तिमीहरुले रोम-रोममा आफ्नो गुरुदेवलाई माताजीलाई अनुभव गर्न सक्नेछौ, यस्तो अनुभव चाँडै आओस्, यसै प्रयासमा छु र त्यो चाँडै आउनेछ ।

मैले तिमीहरुलाई अत्यन्तै प्रेमले पालेको छु कहिले पनि निखिलेश्वरानन्दको कठोर परीक्षामा तिमीहरुको परीक्षा लिएको छैन, हरेकपटक नारायणदत्त श्रीमाली बनेर नै उपस्थित भएको छु तिमीहरुको माझमा । परीक्षा यसकारण लिइन कि तिमीहरुले यस प्रेमलाई बिर्सन सक्ने छैनौ न त यस परिवारलाई नै भुल्न सक्नेछौ जुन तिमीहरुका गुरु भाइ-बहिनीको छ, तिमीहरुलाई त्यसै परिवारमा प्रेमले रहनु छ ।

बेला आएपछि, यो त मेरो कार्य हो, म तिमीहरुको निर्माण गर्दै जान्छु र जुन जुन वचन मैले तिमीहरुलाई दिएको छु त्यसलाई कुनै पनि क्षण मैले बिर्सेको छैन । ती सबै वचनहरुलाई तिमीहरुले आफ्नो सामु आफ्नै आँखाले साकार भएको देख्तै जानेछौ । तिमीहरुको आँखाबाट प्रेमाश्रुका अतिरिक्त अरु कुनै सिद्धिको चाहना बाँकी नै रहने छैन किनकि मेरा सबै कुरा तिमीहरुको नै भइसकेको हुनेछ किनकि 'तिमीहरु नै त मेरा हौ' ।

– सदा झैँ स्नेहसिक्त आशीर्वाद
–तिमीहरुका गुरुदेव
नारायणदत्त श्रीमाली

# गुरु स्तवन

पूर्ण सतान्यै परिपूर्ण रूपं,
गुरुर्वै सतान्यं दीर्घो वदान्यम् ।
आविर्वतां पूर्ण मदैव पुण्यं,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।१।।
त्वमेव माता च ............

न जानामि योगं, न जानामि ध्यानं,
न मन्त्रं न तन्त्रं न योगं क्रियान्वै ।
न जानामि पूर्ण न देहं न पूर्व,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।२।।
त्वमेव माता च ............

अनाथो दरिद्रो जरा रोग युक्तो,
महाक्षीण दीनः सदा जाड्य वक्त्रः ।
विपत्ति प्रविष्ट सदाहं भजामि,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।३।।
त्वमेव माता च ............

त्वं मातृ रूपं पितृ स्वरूपं,
आत्म स्वरूपं प्राण स्वरूपं ।
चैतन्य रूपं देवं दिवन्त्रं,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।४।।
त्वमेव माता च ............

त्वं नाथ पूर्ण त्वं देव पूर्ण,
आत्मं च पूर्ण ज्ञानं च पूर्णम् ।
अहं त्वां प्रपन्न प्रपद्ये सदाहं,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।५।।
त्वमेव माता च ............

मम अश्रु अर्घ्य पुष्पं प्रसूनं,
देहं च पुष्पं शरण्यं त्वमेवम् ।
जीवोऽद्वदां पूर्ण मदैव रूपं,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।६।।
त्वमेव माता च ............

आवाहयामि आवाहयामि,
शरण्यं शरण्यं सदाहं शरण्यम् ।
त्वं नाथ मेवं प्रपद्ये प्रसन्नं,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।७।।
त्वमेव माता च ............

न तातो न माता न बन्धुर्न भ्राता,
न पुत्रो न पुत्री न भृत्यो र्न भर्ता ।
न जाया न वित्तं न वृत्तिर्ममेवं,
गुरुत्वं त्वमेवं गुरुत्वं त्वमेवम् ।।८।।
त्वमेव माता च ............

आवद्ध रूपं अश्रु प्रवाहं,
धीयां प्रपद्ये हृदयं वदान्ये ।
देहं त्वमेवं शरण्यं त्वमेवं,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।९।।
त्वमेव माता च ............

गुरुर्वै शरण्यं गुरुर्वै शरण्यं,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।
एको हि नाथं एको हि शब्दं,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।१०।।
त्वमेव माता च ............

कान्तां च पूर्व वदान्यै वदान्यं,
कोऽहं सदान्यै सदाऽहं वदामि ।
न पूर्व पतिर्वै पतिर्वै सदाहं,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।११।।
त्वमेव माता च ............

न प्राणो वदार्वै न देहं नवाऽर्हं,
न नेत्रं न पूर्व सदाऽहं वदान्ये ।
तुच्छं वदां पूर्व मदैव तुल्यं,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।१२।।
त्वमेव माता च .....................

पूर्वो न पूर्व न ज्ञानं न तुल्यं,
न नारी नरं वै पतिर्वै न पत्न्यम् ।
को कत कदा कुत्र कदैव तुल्यं,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।१३।।
त्वमेव माता च ............

गुरुर्वै गतान्यं गुरुर्वै शतान्यं,
गुरुर्वै वदान्यं गुरुर्वै कथान्यम् ।
गुरुमेव रूपं सदाऽहं भजामि,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।१४।।
त्वमेव माता च ............

आत्रं वतां अश्रु वदैव रूपं,
ज्ञानं वदान्यै परिपूर्ण नित्यम् ।
गुरुर्वै ब्रजाहं गुरुर्वै भजाहं,
गुरुर्वै शरण्यं गुरुर्वै शरण्यम् ।।१५।।

त्वमेव माता च पिता त्वमेव,
त्वमेव बन्धुश्च सखा त्वमेव ।
त्वमेव विद्या द्रविणं त्वमेव,
त्वमेव सर्व मम देव देव ।।

❑

# फेरि एउटा इतिहास कोरियो

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले २०६१ सालदेखि शुभारम्भ गरेको रोट महोत्सवलाई निरन्तरता दिँदै फेरि एउटा इतिहास कोर्न सफल भएको छ । गत वैशाख २६ गतेदेखि जेठ ५ गतेसम्म गोरखास्थित गोरख गुफामा श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवा लाख रोट अर्पण गरी 'छैटौं सवा लाख रोट अर्पण महोत्सव'को महाअनुष्ठानलाई संस्थाले सफलतापूर्वक सम्पन्न गरेको छ ।

वैशाखी पूर्णिमादेखि शुभारम्भ भएको रोट महोत्सवको पहिलो दिन वृहत् शोभा यात्रा सम्पर्क कार्यालय गोरखाबाट गोरख गुफा पुगेको थियो । उक्त शोभा यात्रामा कन्याहरू, घडा बोकेका कन्याहरू, नाथयोगीहरू, सावरपन्थी सदस्यहरूहरु र सामाज्यू, गुरु सेवा दलका सदस्यहरू, प्रमुख जिल्ला अधिकारीलगायत कार्यालय प्रमुखहरू, विभिन्न संघ, संस्थाका प्रतिनिधिहरू, गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम काठमाडौंलगायत गोरखा बजारमा रहेका विभिन्न विद्यालयका विद्यार्थीहरू तथा विभिन्न जिल्ला तथा सम्पर्क कार्यालयहरूबाट आउनुभएका साधक साधिकाहरू एवं भक्तजन हुनुहुन्थ्यो । शोभा यात्राको शोभा बढाउन संस्थाका प्रचार प्रसार केन्द्र, आरती केन्द्रहरूको पनि सहभागिता थियो । पंचेबाजाको टोली अघि-अघि देखिएको शोभायात्रामा सद्‌गुरुदेवहरूको विभिन्न महावाणी अंकित प्लेकार्ड, व्यानर, तुल बोक्नुभएका साधक साधिकाहरूको आकर्षक ताँती देखिन्थ्यो । शोभायात्रामा परमपूज्य सद्‌गुरुदेवहरू विराजमान रहनुभएको सिंगारिएको खटलाई गोरख गुफा नपुगेसम्म धेरैले पालैपालो बोक्ने सौभाग्य पाउनुभएको थियो । उक्त शोभा यात्रा गोरखा जिल्लाभरि नै गुरुहरूको नवीन सन्देश फैलाउँदै अगाडि बढिरहँदा बाटाभरि र घरका छतहरूबाट यसको भव्यता, दिव्यता र आकर्षणको रसास्वादन गर्ने मानिसहरूको भीड देखिन्थ्यो ।

शोभा यात्राका लागि छुट्याइएको रुटमा पर्ने घरका अघिल्तिर राखिएका कलशले शोभा यात्राको भव्य स्वागत गरिरहेको थियो भने घरका छतबाट, बरण्डाबाट, बार्दलीबाट स्वागतार्थ अर्पण गरिएका पानी, अबीर, लावाहरूले सहभागीहरूलाई जेठको प्रचण्ड गर्मीमा शीतलता दिइरहेको थियो । तल्लो दरवार, सतीपीपल हुँदै गणेश स्थान परिक्रमापछि शोभा यात्रा गोरख गुफा पुगेको थियो । यात्राको बीच-बीचमा जयकारको गुञ्जनसँगै पंक्तिबद्ध लस्करलाई बाटामा पानी खुवाएर स्थानीय व्यक्तिहरूले स्वागत गर्नुभएको थियो ।

शोभायात्रा गोरख गुफा पुगेपछि विशेष पूजन, ज्योत पूजन, झण्डोत्तोलन एवं स्थानीय देवीदेवताहरूको पूजन सम्पन्न गरिएको थियो भने सोही दिनदेखि विशेषरूपमा रोट पकाई श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा अर्पण गर्ने कार्य शुभारम्भ भएको थियो ।

महोत्सवको दुई दिन (पहिलो र अन्तिम दिन) बाहेक अन्य दिनमा दैनिक कार्यक्रममा बिहान ६:०० बजेदेखि २:०० बजेसम्म रोट पकाउने, बिहान ७-८ सम्म स्तोत्र पाठ, ८-९ सम्म मन्त्र जप, ९-१० सम्म विशेष हवन कार्यक्रम, १०-२, भोजन ग्रहण, १२-६ भजन-कीर्तन, दिउँसो २-५ गुफाभित्र विशेष पूजन, लक्षदीप अर्पण, ३:३०-५:०० बजेसम्म

रोट अर्पण, पूजन र साँझ ५:०० बजे गुरु आरती, ६:०० कार्यकर्ता भेटघाट कार्यक्रम र यसपछि दीपावली सम्पन्न भएको थियो । कार्यकर्ता भेटघाट कार्यक्रममा विभागीय संयोजकज्यूहरूले विभिन्न विषयमा प्रवचन दिनुका साथै सम्पन्न कार्यको समीक्षासँगै सजावटको लागि कार्य विभाजन र नृत्य पनि त्यस बेलामा हुने गरेको थियो ।

रोट महोत्सवको पहिलो दिन श्री सावर संरचना केन्द्रबाट प्रकाशित 'महायोगीहरूको परिचय' ग्रन्थको अंग्रेजी संस्करण 'Introduction of Mahayogis' को पनि गुरु चरणार्पणपश्चात् लोकार्पण गरिएको थियो भने नवौं दिन (वैशाख ३ गते) सोही केन्द्रबाट प्रकाशित 'मुद्रामृत ध्यान' ग्रन्थको पनि गुरु चरणार्पणपछि लोकार्पण गरिएको थियो । कार्यकर्ता भेटघाट कार्यक्रममा गोरक्ष सुरक्षा मन्त्रलगायत माता गोरखकाली एवं माता मनकामनाको अत्यन्त दुर्लभ मन्त्र पनि प्रदान गरिएको थियो । यसपटकको रोट महोत्सवमा खट्ने अधिकांश कार्यकर्ताहरूले परमपूज्य सद्गुरुदेवहरूको कृपास्वरूप इच्छानुसारका दिव्य मन्त्रहरू प्राप्त गर्न सफल भएका थिए । समग्रमा यसपटकको रोट महोत्सव मन्त्रमय भएर सम्पन्न भएको थियो किनभने सद्गुरुदेवहरूले महोत्सवभरि कार्यकर्ताहरूका लागि मन्त्र दीक्षा खुला गरिदिनुभएको थियो ।

महोत्सवमा दिनहुँ दिउँसो २:०० बजे विशेष गुरु पादुका पूजन सम्पन्न भएको थियो भने प्रत्येक दिन विभिन्न समयमा गुफावरिपरि रहेका विभिन्न देवीदेवताहरूको तान्त्रिक पूजन पनि सम्पन्न गरिएको थियो । गुरु पादुका पूजनपश्चात् प्रत्येक दिन लक्ष्यदीप प्रज्ज्वलन गरिएको थियो । महोत्सव अवधिभरि ५१ लाखभन्दा बढीको संख्यामा दीप अर्पण गरिएको थियो । ३:०० बजेपछि नाथ परम्पराबाट नित्य पूजन एवं रोट अर्पण गरिएको थियो । मन्दिरका प्रमुख नाथयोगी पूजारीहरूद्वारा गुरु गोरखनाथको चरणकमलमा रोट अर्पण भएको थियो । घण्टी, डमरु, नाद, पञ्चेबाजा बजाएर रोट अर्पण भएको थियो । रोट अर्पणमा तारिएको (ताई) र सेकिएको (भुङ्ग्रे) रोट गरी दिनहुँ हजारौँको सङ्ख्यामा रोट अर्पण भएको थियो ।

हनुमान् भञ्ज्याङ्गबाट तल हेलिप्याडनिर भक्तजनलगायत साधक साधिकाहरूका लागि पाल टांगेर अस्थायी बसोबासको व्यवस्था गरिएको थियो । त्यहाँ बस्ने व्यवस्था भएको हुनाले रोट महोत्सवमा सहभागीहरूले राहत महसुस गर्नुभएको थियो । सोही हेलिप्याडनिर भक्तजन एवं साधक साधिकाहरूलाई भोजन गर्ने व्यवस्था पनि गरिएको थियो । उक्त क्षेत्रमा गुरु कार्यका लागि दमौली, तनहुँबाट सशस्त्र प्रहरीहरूको समूह परिचालित थियो भने गोरखास्थित जिल्ला प्रहरी कार्यालयबाट पानीको व्यवस्था भएको थियो । यसका अलावा नेपाली सेना, जिल्ला विकास समिति, नगरपालिका, उद्योग वाणिज्य संघ, पत्रकार महासंघलगायत सरकारी एवं गैर-सरकारी संस्थाहरूले विभिन्न रूपबाट कार्यक्रम सफल पार्न सहयोग पुऱ्याउनुभएको देखिन्थ्यो । काठमाडौँलगायत विभिन्न जिल्लाबाट दैनिकरूपमा हुने सहभागीहरूको भीडले हेलिप्याड वरिपरिको क्षेत्र खचाखच हुने गर्थ्यो ।

महोत्सवभरि गोरखा बजारका अधिकांश होटेल, लजहरू भक्तजन र साधक साधिकाहरूले खचाखच भरिएको थियो । स्थानीय बासिन्दाहरूको घर पनि सहभागीहरूले भरिएको थियो । गोरखा बजार पहेँलो चादर ओढेर ओहोर-दोहोर गर्ने साधक साधिका तथा भक्तजनहरूबाट भरिएको हुन्थ्यो भने एकापसमा भेट हुँदा 'जय गुरुदेव'को अभिवादन साटासाटको गुञ्जनले पनि गोरखा बजारलगायतका क्षेत्रहरू दिव्य एवं चैतन्य बनेको महसुस सबैले गर्नुभएको थियो । रोट महोत्सवको ११ दिनसम्म गोरखामा अत्यन्तै चहलपहल बढेको र यस अवधिमा आन्तरिक पर्यटनमा वृद्धिभएको जानकारी स्थानीय पर्यटन व्यवसायीहरूले गराउनुभएको थियो ।

रोट महोत्सवमा दैनिकरूपमा नि:शुल्क प्राथमिक उपचारको व्यवस्था गरिएको थियो भने यसपटक महोत्सवस्थल परिसरभन्दा बाहिर नारेश्वरमा समेत तीन दिने स्वास्थ्य शिविर संचालन गरिएको थियो । उक्त शिविरमा दैनिक बढीमा २०० जनासम्मले सेवा पाउनुभएको थियो । प्राथमिक उपचारअन्तर्गत आयुर्वेदिक र आधुनिक एलोप्याथिक औषधिहरू आवश्यकता हेरेर वितरण गरिएको थियो । प्राथमिक उपचारमा गुरु सेवा गर्नेहरूमा आश्रम मेडिकल टिमलगायत

गोरखा जिल्ला अस्पताल एवं युनिभर्सल एकीकृत स्वास्थ्य अनुसन्धान तथा विकास फाउन्डेशनको पनि सहभागिता रहेको थियो ।

अन्तिम दिनबाहेक महोत्सवभरि समीको चौतारामा दिनको १२:०० बजेदेखि शुरु भई साँझ ६ बजेसम्म भजन-कीर्तनको कार्यक्रम ६ घण्टासम्म अटुट चलिरहेको हुन्थ्यो । कार्यक्रममा विभिन्न जिल्लाबाट आउनुभएका साधक साधिकाहरूबाट एवं सम्पर्क कार्यालयहरूबाट पनि दिनको २:०० बजेसम्म भजन प्रस्तुत हुन्थ्यो भने २:०० बजेदेखि बालिका एवं उहाँको समूहबाट भजन प्रस्तुत गरिएको थियो । भजनमा नृत्य गर्नेहरूले स्वस्फूर्तरूपमा कम्मर मर्काउँदा, हात हल्लाउँदा भजन कार्यक्रममा अझ दिव्यता र भव्यता थपेको महसुस हुने गर्थ्यो । टाढा-टाढाबाट पनि केवल भजनकै लागि मात्र भनी आउने सहभागीहरूको भीडले समीको चौतारा खचाखच हुने गर्थ्यो । आगन्तुकहरू दिनभरि नाचेर पनि थाकेका देखिँदैन थिए । बालिका बहिनीको भजनमा नाच्नेहरूले आफूलाई पनि बिर्सेको महसुस गरिएको थियो । भजन हुँदा गुरु कार्य गर्नेहरू पनि सोही बाटो हिँडेको अवस्थामा एकै क्षण भए पनि कम्मर मर्काएर जाने गर्नुहुन्थ्यो । कार्यक्रममा गोरखाका गाउँ गाउँबाट समेत विद्यार्थी, अभिभावक, शिक्षकलगायत अन्य सर्वसाधारणहरूको सहभागिता हुने गर्दथ्यो ।

महोत्सवको अन्तिम दिन अर्थात् समापन समारोहमा यज्ञ, दान आदि कार्यक्रमका साथ विदाइ समारोहको आयोजना गरिएको थियो । दिउँसो २:०० बजेतिर भएको विदाइ समारोहमा नाथयोगीहरू, रोट कार्यक्रमभरि खट्ने सहयोगी, घडा बोक्ने कन्याहरू, सशस्त्र प्रहरी टोली, बालिका बहिनीलगायतलाई सावर पन्थी सदस्य १ र २ ज्यूले पत्रम्-पुष्पम्सहित टीका लगाएर उपहार प्रदान गर्नुभएको थियो ।

विदाइ समारोहमा गोरखा जिल्लाका प्रमुख जिल्ला अधिकारी, जिल्ला न्यायाधीश, नगरपालिकाका कार्यकारी अधिकृतले बोल्नुभएको थियो । वरिष्ठ नाथयोगी टेकनाथ योगी र प्रदीपनाथ योगीज्यूले आशीर्वचन दिनुभएको सो समारोहमा गोरखाको हेलिप्याडनिर निर्माणाधीन गोरखा आश्रम भवनका लागि चन्दास्वरूप थुप्रै चन्दादाताहरूले आफूले दिने रकमको घोषणा पनि गर्नुभएको थियो भने पोखरास्थित सम्पर्क कार्यालय रामघाटबाट १ लाख २५ हजार सहयोग प्रदान गरिएको थियो । समारोहमा यसपटक जम्मा १,७४,५७७ संख्यामा रोट अर्पण गरिएको जानकारी गराइएको थियो ।

महोत्सवमा स्थूलरूपमा खट्ने कार्यकर्ता (गुरु सेवक/सेविका) हरू प्रत्येक क्षण हर्ष, जोश, जाँगरका साथ गुरु कार्यमा खट्नुभएको देखेर त्यहाँ आउने आगन्तुकहरू पनि अचम्मित देखिनुहुन्थ्यो । नाच्दा पनि नथाक्ने, गुरु कार्य गर्दा पनि नथाक्ने, जे गर्दा पनि नथाक्ने, पानी पर्दा पनि गुरु कार्यलाई अटुट राख्ने, हुरी आउँदा पनि गुरु कार्यमा खटेकोखट्यै गर्ने कार्यकर्ताहरूको अनुशासनको प्रशंसा विदाइ समारोहमा बोल्ने सबै वक्ताहरूले खुलेर गर्नुभएको थियो । महोत्सवको दोस्रो दिनदेखि पर्न थालेको पानी र हावाले महोत्सवमा केही बाधा पुऱ्याउला कि भन्ने अनुमान कार्यकर्ताहरूको दृढ इच्छाशक्ति र गुरु कार्यमा आफूलाई पनि बिर्सने सद्गुणले गर्दा ती हावा हुरी पनि अनुकूलतामा परिवर्तन भएको महसुस भएको थियो । विशेषत: रोट महोत्सवको थालनीसँग पानी परेकोले लामो खडेरीबाट दिक्क भएका नेपालीहरूले राहतको महसुस गर्न पाएका थिए ।

स्मरणीय छ, यस महोत्सवमा स्थूलरूपमा सिद्धाश्रम शक्ति केन्द्रका कार्यकर्ताहरू खट्नुभएको थियो भने सूक्ष्मरूपमा श्री सावर संरचना शक्ति केन्द्रको १११ नं. को टिम 'गोहना श्री' खट्नुभएको थियो । गोहना श्रीअन्तर्गत रहेर महोत्सवमा सूक्ष्मरूपमा खट्ने उप-टिमहरूमा 'गोशिहना श्री', 'गोकहना श्री', 'गोधहना श्री', 'गोइहना श्री', 'गोकाहना श्री', 'गोसाहना श्री' र 'गोअहना श्री' हुनुहुन्थ्यो । यस महोत्सवको सफलतामा उक्त टिमको नै प्रमुख हात रहेको थियो । यसप्रकारका विशेष कार्यक्रमहरूका लागि परमपूज्य सद्गुरुदेवहरूको कृपा, आशीर्वादस्वरूप संरचनाका विभिन्न टिमहरू सूक्ष्मरूपमा आई स्थूलरूपमा रहेका कार्यकर्ताहरूको शरीरमा प्रवेश गरी गुरुकार्य गर्ने गराउने परम्परा रहिआएको छ ।

# श्री गोरख महापुराण

*परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ । यसबाट परमपूज्य सद्गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौं । यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो । यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल,गोर्खा) स्वयंको नै हुनेछ ।*

शिवको प्रसन्नताको लागि एकजना धर्मात्मा पण्डित शिवालयमा शिवपुराणको कथा लोभ, लालचरहित भएर भन्ने गर्दथ्यो । ऊ शुभ आचरणवाला सन्तोषी व्यक्ति भए पनि उसको कथा वाचनमा स्रोता धेरै कम आउँथे । ऊ यसको वास्ता नगरी निश्चिन्त भएर आफ्नो कार्यमा ध्यान राख्दथ्यो । कथा भन्दाभन्दै तीन महिना बित्यो । घरबाट खर्च पठाउनको लागि बारम्बार चिठी आइरहेको थियो तर ऊसँग पठाउनका लागि केही पनि थिएन । कथाको पूर्णाहुतिमा पनि विशेष धेरै चढ्ने आशा थिएन ।

एक दिन त्यस गाउँको एकजना लोभी साहु वनको शिव मन्दिरमा गयो र त्यहाँ पुगेर हेर्दा त मन्दिर बन्द थियो । त्यहाँबाट मानिसको शब्द निस्किरहेको थियो । साहुले कान थापेर त्यसलाई सुन्न लाग्यो । उसले शिव-पार्वतीले यसप्रकारको वार्ता गरिरहनुभएको सुन्यो– हे प्राणपते ! हे सदाशिव ! तपाईं आफ्नो भक्तको रक्षा गर्न किन भुल्नुहुन्छ, के यो उचित हो ? उत्तर– प्रिय पार्वती, तिमी कुन भक्तको कुरा गरिरहेकी छ्यौ ? मैले त सदा भक्तहरुको रक्षा गरेको छु । प्रश्न– हे स्वामी ! यसै गाउँमा चन्द्रशेखर महादेवको मन्दिरमा जुन पण्डित कथा बाँच्दछ, त्यो तपाईंको पूर्ण भक्त हो । उसको घरमा बालबच्चा भोकले मरिरहेका छन् । शिव पुराणको कथा बाँच्दा-बाँच्दा तीन महिना बित्यो । अब त कथाको पूर्णाहुति गराउनुहोस् । त्यहाँ स्रोता पनि धेरै कम आउँछन्, ब्राह्मण अत्यन्तै गरीब भए पनि सुशील छ । आफ्नो भक्तलाई पूर्णाहुतिको दिन राम्रो रकम दिलाउनुपर्छ । उत्तर– हे देवी ! मलाई आफ्नो भक्तको ध्यान छ, म त्यसको पूर्णाहुति पर्सी गराइदिनेछु र उसको भक्तिअनुसार नै उसलाई एघार सय रुपियाँ दिलाइदिनेछु । पार्वतीले हाँसेर खित्का छोडेर भनिन्– हे देव ! मलाई त एघार सय कौडी पनि चढ्ने आशा छैन । हे पार्वती, के तिमीलाई मेरो सामर्थ्यमा विश्वास छैन । म पर्सी उसलाई एघार सय रुपियाँ अवश्य दिलाउँला । सारा कुरा सुनेर

साहु आफ्नो घर फर्क्यो । उसले विचार गर्न लाग्यो– आज शिवजीको दर्शन त प्राप्त भएन तर शिव पार्वतीको वार्ता सुन्न पाइयो जसबाट मलाई दर्शनभन्दा पनि धेरै लाभ भएको देखा पर्छ । शास्त्रहरुमा श्रावण महिनाको जुन महात्म्यलेखिएको छ, त्यो झूटो होइन । भोलिपल्ट बिहानै ऊ कथा भन्ने पण्डित कहाँ गयो र हात जोडेर भन्न लाग्यो– गुरुजी ! शिव पुराणको पूर्णाहुति कहिले हो ? पण्डितजीले भने– सेठजी ! समय अनौठो छ, कथा भन्दा भन्दा तीन महिना बित्यो, घर गएर खर्च दिन हतार छ, यसकारण भोलि नै पूर्णाहुति गरिनेछ, प्रराब्धवश बच्चाहरुको भाग्यबाट जो मिल्नेछ त्यही सही । सेठले भन्यो– गुरुजी ! कथा सुन्नेहरुमा कुनै सभ्य, श्रद्धालु श्रीमान् त देखिँदैन र धेरै स्रोता पनि आउँदैनन्, चढोत्तरी गुजारालायक कहाँबाट हुनेछ ? यसकारण तपाइँ आफ्नो चढोत्तरीको ठेक्का मलाई दिनुहोस् । तपाइँ भन्नुहोस्, ठेक्कामा के लिन चाहनुहुन्छ ? पण्डितजीले भने– सेठजी जो तपाइँ मनासिब सम्झनुहुन्छ त्यही नै दिनुहोस् । साहुले पचास रुपैयाँ निकालेर पण्डितको हातमा राखिदियो र भन्यो– पण्डितजी यतिमा मेरो ठेक्का भयो, घटी-बढीको म मालिक ।

पण्डितले विचार गरे– पचास रुपैयाँ लिनु ठीक हो तर अझ केही बढाउँछ कि ? पण्डितले भने– सेठजी, तीन महिनाको टाउको दुःखाइको केवल पचास रुपैयाँ दिन्छौ, हामी सन्तोषी ब्राह्मण आफ्नो कर्तव्यको पालना गर्दछौं । म कतिसम्म कम गरूँ ? यदि तपाइँ ठेक्का लिन चाहनुहुन्छ भने सोचेर सम्झेर रकम दिनुहोस् । साहुले भन्यो- केवल आठ, दश मानिस त कथामा आउँछन् । पाँच, सात रुपैयाँभन्दा विशेष के मिल्छ ? मलाई त तपाइँमाथि दया लागिरहेको थियो । यसकारण म पचास रुपैयाँ दिन तयार भएँ । जब पण्डितजी पचास रुपैयाँमा राजी भएनन् तब सेठले सय रुपियाँ दिएर ठेक्का लियो । भोलिपल्ट बिहानै आफ्नो ठेक्काको रकम असुल गर्नको लागि साहु मन्दिरमा आएर बस्यो । पूजनादि सामान्यरुपबाट भयो । त्यसपछि चढाउन शुरु भयो । कसैले चार आना, कसैले आठ आना चढाए । यसरी साँझसम्म सवा पाँच रुपैयाँ जम्मा भयो । सेठ क्रोधमा भरिएर यसो भन्दै त्यहाँबाट हिँड्यो– मैले त एघार सय रुपैयाँको लालचमा सय रुपैयाँको ठेक्का लिएको थिएँ ।

पञ्चानब्बे रुपैयाँ घरबाट गयो र बिहानैबाट भोजन नमिल्नाले भोकै पनि रहन पर्‍यो । सबैभन्दा ठूला देवता

महादेव पनि झूटो बोल्नुहुँदो रहेछ। उहाँको वचनको कारणले म पञ्चानब्बे रुपैयाँबाट लुटिएँ । यसरी क्रोधमा भुनभुनाउँदै त्यो साहु महादेव-पार्वतीको वार्ता भएको ठाउँमा पुग्यो । रिसले उसले शिवलिंगलाई लात्ताले हान्न लाग्यो । जब तेस्रो लात हान्यो तब उसको खुट्टा शिवलिंगमा टाँसियो । उसले छुटाउनको लागि धेरै प्रयास गर्‍यो तर त्यो झनै टाँसियो । ऊ उचालिँदै पछारिँदै थियो। चोट लाग्नाले उसको शरीरबाट रगत बग्न लाग्यो र ऊ रुने कराउने गर्न थाल्यो। यस क्रममा एक घण्टा बित्यो। तब आफ्नो बुबालाई खोज्दै उसको छोरो त्यहाँ आइपुग्यो । उसले देख्यो कि उसको बुबा मन्दिरमा हात जोडेर महादेवसँग प्रार्थना गरिरहेको छ– हे देवताहरुका देवता ! मेरो अपराध क्षमा गर्नुहोस् । मबाट ठूलो भूल भयो, हानी भएकोले मेरो बुद्धि बिग्रन गएको थियो । म अज्ञानी तपाईंको बालक हुँ, मेरो अपराध क्षमा गरिदिनुहोस् । जब साहूले बड्बडाएर यसप्रकार भन्यो तब मन्दिरबाट आवाज निस्क्यो– हे साहु ! तैंले पण्डितलाई ठेक्काको केवल एक सय रुपैयाँ दिएको छस् । कुरो त एघार सयको निश्चित गरिएको थियो । तँ आफ्नो छोरालाई भन् कि पण्डितलाई अरू एक हजार रुपैयाँ दिएर एघार सय रुपैयाँको रसीद लिएर म कहाँ आउनू । तब तँलाई छुट्टी मिल्नेछ । साहुसँग पचासी हजार रुपैयाँ थियो। उसको लागि एक हजार रुपैयाँ प्राणको लागि के कुरा थियो ? उसले तुरुन्त छोरालाई आज्ञा दियो– धनीराम, घर गएर एक हजार रुपैयाँ पण्डितलाई दिएर रसीद लेखाएर तुरुन्त मन्दिरमा आउनू जसबाट महादेवलाई थाहा होस् कि पण्डितको कथाको चढोत्तरी पूर्ण भयो । आफ्नो पिताको आज्ञानुसार धनीरामले अति शीघ्र पण्डितलाई हजार रुपैयाँ दिएर एक हजार एक सयको रसीद लेखाएर ल्यायो र त्यो रसीद शिव मूर्तिमा राखिदियो। तब साहु शिवलिंगबाट छुटेर आफ्नो घर पुग्यो। पण्डित शुभ कर्म, धर्मवाला भएकोले उसको शुभ संस्कार बढ्दै गएर अदृष्ट पक्व भएर पुण्य फल दिनलाई प्रवृत्त भयो। साहुको पाप अदृष्ट लोभको कारण बढ्दै गयो र लोभ पापको मूल हो नै। क्रमैले लोभबाट पापको मूल गहिरो भएर वृक्षको रुप धारण गर्दै गयो । तब दु:ख रगताम्यरुपी फल उसलाई मिल्यो । एघार सय पनि गयो र त्यो अलग भयो, यही पापको प्रत्यक्ष फल हो । बाबु औघडनाथ, अब राम्ररी बुझ्यौ होला । हरि ॐ तत्सत् । समाप्त ।

सिद्धाश्रम शक्ति केन्द्रको व्यवस्थापनमा सञ्चालित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा अध्ययनरत २ जना भाइबहिनीहरूको अनुभवलाई यस अंकमा प्रकाशित गरिएको छ–

## मलाई आगोले पनि पोलेन

एकदिन बिहानको प्रार्थना सकेर स्कूलबाट हामीलाई सिकाइएको विधिबाट ध्यान गर्दै थिएँ । त्यो दिन मलाई ध्यान गर्दा अरू दिनभन्दा अलि फरक किसिमको मज्जा लागिरहेको थियो । त्यतिकैमा केही समयपछि परमहंस स्वामी श्री निखिलेश्वरानन्द गुरुदेव आउनुभयो । उहाँ आउँदाखेरि पहिला पूरै उज्यालैउज्ज्यालो भएको थियो र केही समयपछि मात्र मैले गुरुदेवको दर्शन पाएँ । उहाँले सेतो रंगको कुर्ताजस्तो कपडा लाउनुभएको थियो । तर उहाँको स्वरूप अर्कै खालको थियो । कपाल लामो लामो थियो, मुख पूरै उज्यालो थियो । पछि मैले थाहा पाएँ कि उहाँ संन्यासी स्वरूपमा आउनुभएको थियो । त्यसपछि उहाँले मलाई उठाएर अर्कै ठाउँमा लानुभयो र पछि मैले आँखा खोल्दा त्यो ठाउँ पूरै आगो नै आगोले भरिएको थियो । त्यसपछि गुरुदेवले मलाई आगोमा ध्यान गर भनेर भन्नुभयो । पहिला त आगो देखेर जान डर लागेको थियो तर पछि गुरुदेवले भनेपछि आगोमा बसेर ध्यान गर्न थाले । यसरी आगोमा बसेर ध्यान गर्दा पनि मलाई आगोले पोलेन... केही समय आगोमा ध्यान गरेपछि मलाई आगोले पोल्न पोल्न थालेपछि गुरुदेवले मलाई त्यहाँबाट निकाल्नुभयो । आगोमा बसेर कसरी ध्यान गर्ने भन्ने विधि पनि उहाँले नै सिकाउनुभएको थियो । त्यो ध्यान सकेपछि उहाँले भन्नुभयो कि एकचोटि पहिला पनि उहाँले मेरो परीक्षा लिइसक्नुभएको छ र अर्कोचोटि फेरि लिन आउने छु भनेर । त्यसपछि उहाँले मलाई विद्याश्रममा नै फर्काइदिनुभयो । त्यो ध्यानको केही दिनपछि साईबाबाले दर्शन दिएर आशीर्वाद दिनुभएको थियो ।

ध्यानमा गुरुदेवलाई देख्नु अगाडि यस्तो कुरामा त्यत्ति विश्वास लाग्दैन थियो । तर ध्यानमा सबैकुरा देखेपछि मलाई विश्वास लाग्न थाल्यो । त्यो दिनदेखि मैले अरूसँग झगडा गर्न छाडेकी छु, पढ्न पनि मन लाग्छ । पहिला परीक्षामा 20/21th Rank ल्याउँथे तर अहिले 6/7th हुन थालेकी छु । घरमा पनि सबैले राम्रो भएकी छे भनेर खुसी हुनुहुन्छ । जय गुरुदेव !

## म अप्सरासँग नाचें र गणेशजीको लड्डु पनि खाएँ...

एकदिन म गुरुदेवलाई प्रार्थना गरेर ध्यान गर्दै थिएँ । त्यत्तिकैमा मेरो अगाडि एकदमै उज्यालो भयो, मैले त्यो उज्यालोलाई हेरिराख्दा त्यहाँबाट निखिलेश्वरानन्द गुरुदेव आउनुभयो । उहाँको चारैतिर उज्यालो थियो । गुरुदेवको कपाल पनि लामो थियो । हामीले फोटोमा हेरेको भन्दा पनि अलि लामो कपाल र उहाँले उज्यालो कपडा लगाउनुभएको थियो । मैले उहाँलाई हेरेपछि उहाँलाई ढोगें, अनि उहाँले मलाई हेरेर हास्नुँभयो र आफ्नो हत्केलालाई मतिर फर्काएर आशीर्वाद दिनुभयो । उहाँले मलाई आशीर्वाद दिँदा उहाँको हातबाट पहेँलो रंगको शक्ति निस्केर मभित्र छिरेको थियो । त्यतिखेर मलई साह्रै रमाइलो र मज्जा लागेको थियो । त्यसपछि उहाँले मलाई आशीर्वाद दिँदै राम्ररी पढ्नू भनेर जानुभयो ।

अर्कोदिन मैले ध्यान गरिरहेको समयमा म पानी नै पानी भएको ठाउँमा पुगें । त्यो ठाउँको चारैतिर टाढा-टाढासम्म पानी नै पानी थियो र त्यो पानीको बीचमा एउटा ठूलो खम्बा थियो । त्यो खम्बामा गुरुदेवको पादुका राखेको मैले देखें । त्यसपछि त्यो पानी भित्रबाट निखिलेश्वरानन्द गुरुदेव बाहिर आउनुभयो । अनि उहाँले मलाई माथितिर लग्नुभयो । माथिको ठाउँ ज्यादै अचम्मको थियो । धेरै नै उज्यालो र रमाइलो पनि थियो । त्यहाँ अरू थुप्रै देवीदेवताहरू पनि हुनुहुन्थ्यो । मैले त्यहाँ गौतम बुद्ध, महाकाली माता, सरस्वती माता र हनुमान्जीलाई पनि देखें । सबै भगवान्हरूले ध्यान गरिरहनुभएको थियो । त्यहाँ त मैले ठूला र राम्रा फूलहरू पनि देखें । गुरुदेवले मलाई त्यहाँ छाडेर जानुभयो । त्यसपछि मैले चारैतिर हेर्दा अलिपर छ जना अप्सराहरूले नाचेको देखें, उहाँहरू साह्रै राम्रा र उज्याला हुनुहुन्थ्यो । मलाई पनि नाच्नको लागि मन लागेको हुनाले केही समय नाचेर बसें । त्यसपछि मैले भगवान् गणेशसँग खेलेर बसें । उहाँले नै दिनुभएको मीठो लड्डु पनि खाएँ । केही समय पछि उहाँहरूको ध्यान सकिन लागेको हुनाले गुरुदेवले अब जानुपर्छ भनेर भन्नुभयो । अनि गणेश भगवान्ले तिमी फेरि आऊ भनेर भन्नुभयो र मैले पनि हुन्छ भनें । त्यसपछि गुरुदेवसँगै म फर्केर विद्याश्रम आएँ ।

अर्कोदिन फेरि ध्यान गर्दा मैले गोरखकाली माताको तेस्रो आँखा देखें । त्यो आँखाबाट अरू थुप्रै देवीदेवताहरू निस्किरहनुभएको थियो । अनि त्यसपछि माताले मलाई आशीर्वाद दिनुहुँदा उहाँको हातबाट पहेँलो रंगको शक्ति निस्केको थियो । अनि..(यसपछिको अनुभव कसैलाई पनि नभन्नू भन्नुभएकोले गोप्य राखेको छु ।)

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'अकथ कहानी प्रित की' विषयको प्रवचनलाई अनुवाद गरी प्रकाशन गरिएको छ ।*

# विरहभित्रको प्रेम

तिमीबिना त मेरो हालत ठीक त्यस्तै भएको छ जस्तो कुमुदिनीको हुन्छ... चन्द्रमालाई नदेखेर कुमुदिनी ओइलाएजस्तै मेरो हालत भएको छ... उसलाई पानी प्राप्त भए पनि... हावा प्राप्त भए पनि... सबै कुरा प्राप्त भए पनि यदि चन्द्रमा उदाएन भने कुमुदिनी त ओइलाएर समाप्त हुन जान्छ... जसै चन्द्रमा उदाउँछ त्यो यसरी फुल्दछ र यस्तो बास्ना दिन लाग्दछ कि मानिसलाई लाग्दछ– कुमुदिनीभन्दा बास्ना आउने फूल कुनै अर्को छैन ।

*विरहिन व्याकुल केशवा निसदिन दुखी विहाय,*
*जैसे चन्द्र कुमोदिनी बिन देखे कुम्हलाय ।*

चन्द्रमालाई नदेखेर कुमुदिनी ओइलाएझैं तिमीलाई नदेखेर मेरो शरीर ओइलाएको छ । यस शरीरमा अब कुनै प्रकारको चमक छैन र यस शरीरमा अब म कुनै पनि प्रकारको चमक राख्न पनि मन पराउँदिन, अब यस शरीरको कुनै महत्त्व छैन । जुन तिम्रो काम आउन सकेन, त्यसलाई राखेर मैले के नै गर्छु र ? मैले त यस शरीरलाई मुर्दालाई झैं आफ्नो काँधमा बोकेर हिँडिरहेको छु... तर पनि म अघि बढ्दै गइरहेको छु... र मेरा पाउहरु आफै कहाँ गइरहेका छन्... यस कुराको त मलाई केही होश पनि हुँदैन । म के गरूँ ! यसको मलाई ज्ञान पनि छैन ।

*दीन दुःखी दीदार बिन धरी पलक झक नाहीं,*
*दरस दया कर दीजिये प्राण निसै नाहीं ।*

यस कुरालाई तिमीले निश्चय नै बुझ– यदि तिमी आएनौ भने यो प्राण यस शरीरबाट निस्कँदैन... हुनसक्छ सासलाई निस्कन नदिएर दुई-चार महिना, एक-दुई वर्ष बाँचिरहुँ, मानिसहरुले सोध्नेछन्– के भएको हो, प्राण त गएको छैन । मेरो प्राण त निस्कनै सक्दैन किनकि यदि मैले जीवनको प्रारम्भ तिम्रो पर्खाइमा गरेको छु भने मेरो जीवनको अन्त पनि तिमीसँगको मिलनमा नै हुन्छ । मैले तिमीलाई आफ्नो आँखामा बसाएको दिन मेरो आँखा आफै बन्द हुनेछ ।

*अंखियन की करि कोठरी पुतली पलंग बिछाय,*
*पलकन की चिक डारि कै पिय को लिया रिझाय ।*
*ना मैं देखूं और को ना तोहे देखन देहूं ।*

यति त मैले पनि सोच्दछु कि मैले तिमीलाई आफ्नो आँखामा लुकाउँछु भने तिमीलाई म बाहेक अरूले देख्न सक्दैन । म गाउँछु, म नाच्छु, म मुस्कुराउँछु, जसरी तिमी खुशी हुन्छौ त्यसरी म तिमीलाई खुशी राख्छु... त्यसैमा

जीवनको आनन्द छ... र यदि मैले तिमीलाई खुशी पार्नै सकिन भने त फेरि मेरो जीवनको कुनै उद्देश्य रहँदैन। मेरो जीवनको एउटै मात्र त ध्येय छ कि तिम्रो प्रतीक्षा गरूँ। एउटै आशा छ कि कुनै बेला तिमी मेरो घर आऊ... म तिमीलाई पुकाछु, बोलाउँछु र तिमी आऊ।

आज यो मस्तीको अवस्था कस्तो ! यस्तो लागिरहेको छ कि आज कुनै नयाँ हावा बहेको छ। यस्तो लागिरहेको छ कि कुनै सुगन्धित बतास चलेको छ... मलाई लागिरहेको छ कि तिमी आइरहेका छौ ! किनकि आज आनन्द स्वयं नाचिरहेको छ, आज पूरा घर झुमिरहेको छ... यो चिसो हावा चल्नु, यो मनमा उत्साह आउनु यस कुराको परिचायक हो कि तिमी कतै नजिकै छौ, तिम्रो आगमनको सुगन्धले गर्दा नै यो हावा सुगन्धित भएको छ, तिम्रो सासको सुगन्धबाट यो हावा सुगन्धित भएको छ। तिमी आइरहेका छौ, निश्चय नै तिमी आइरहेका छौ, तिमी मकहाँ आइपुग्नुभन्दा अघि नै यी सबै कुरा यस्तो महसुस भइरहेको छ... र मेरो विश्वास आफैमा पक्का छ, यसकारण पक्का छ कि मेरो हृदय साक्षी छ– यो सुगन्ध केवल तिम्रो शरीरको सुगन्ध हो... मैले यस सुगन्धको अनुभव गरेकी छु... मैले तिम्रो शरीरको सुगन्धलाई आफ्नो प्राणमा राखेकी छु... यस सुगन्धलाई म चिन्दछु... र मैले यसै सुगन्धको सहायताबाट नै तिम्रो प्रतीक्षामा जीवन काटेकी छु।

–तर यस बेला त मसँग तिम्रो सम्झनाका अतिरिक्त केही पनि छैन। म केही पनि होइन, तिम्रो गुलामको अतिरिक्त। मेरो केही विधि छैन, मेरो कुनै उद्देश्य पनि छैन–

*तेरे हुकुम से इक इक सांस मेरी रवां,*
*तेरे इशारों से पैदा नजर में नक्शोनिशां।*
*तेरे ही दम से जबां पर जहूरोलब्जो बयां,*
*तेरी निगाहे करम ही से रफ्फे सोदाई जहां।*
*तेरा गुलाम नहीं हूं तो और क्या हूं मैं ?*
*तेरी बात से बनती है हर बात मेरी,*
*तेरा ही नाम तो है सारी कायनात मेरी।*
*तेरा ही जिम्मे मुकर्रर तो है हयात मेरी,*
*तेरी ही यादें मुसल्सल का रूप जात मेरी।*
*तेरा गुलाम नहीं तो और क्या हूं मैं ?*
*तेरे कदमों पर रौनक फरोज हर दो जहां,*
*यहीं अदब से झुकाये हैं सर मकानो जहां।*
*यहीं से होता है सबका उसूलो अमनोअमा,*
*छोडकर तेरे कदमों को मैं जाऊँ भी तो कहां।*
*तेरा गुलाम नहीं हूं तो और क्या हूं मैं ?*
*यकीनो जोरोय दिनयन यहीं से मिलता है,*
*अमीनो इश्क-ए-मुहब्बत यहीं से मिलता है।*
*शरूरे राज-ए-हकीकत यहीं से मिलता है,*
*शरूरे कैफ-ए-मुसर्रर यहीं से मिलता है।*
*तेरा गुलाम नहीं हूं तो और क्या हूं मैं ?*

यसबाहेक तिमी मसँग अरू के कुराको अपेक्षा गर्छौ ! यही कि तिमी मसँग मिल र म आफैलाई पूर्णरुपले समर्पित गरूँ। यही त तिमी चाहन्छौ र म पनि यही चाहन्छु कि तिमीले मसँग भेट र त्यसपछि म आफैमा मग्न हुन जाऊँ। लोभ्याउने त तिम्रो बानी नै परिसकेको छ, न त तिमीले चिठ्ठी नै लेख्छौ, न त तिमी स्वयं आउँछौ–

*कोई कहियो रे प्रभु आवन की,*
*आवन की मन भावन की*
*आप न आवे लिख नहीं भेजे,*
*बान पडी ललचावन की।*

यो कस्तो कठोरता हो, यो कस्तो निर्दयता हो– न तिमी आउँछौ, न त तिमीले केही लेखेर नै पठाउँछौ। क्रमशः

जय गुरुदेव !

# प्रयोग नगर्ने त घिउकुमारी ?

आजको विश्व फेसनको र विज्ञापनको विश्व ! जुन कुरा विज्ञापनमा आयो त्यही नै सबैको हातमा र मुखमा ! पुन: एकपल्ट विश्व आयुर्वेदमुखी हुन थालेको प्रतीत हुन्छ। हेरौँ न, एउटा साबुन होस् वा स्याम्पु, तेल होस् वा जेल, खाद्य पदार्थ हुन् वा औषधिहरू सबैमा आयुर्वेद, हर्बल र नेचुरल जोडिन थालिसकेको छ। आखिर यो समाज प्रकृतितर्फ नफर्की नहुने रहेछ । कति कृत्रिम खाने, कति देखावटी शैलीमा जीवन जिउने ? सबैजसो हानिकारक औषधिहरू पनि त हाम्रै वरिपरि भएका जडिबुटीमा भएका रसायनलाई निकालेर बनाइएका हुन्। यस्ता हानिकारक वस्तुहरू अब हामीले किन प्रयोग गरिरहने ? सरल जडिबुटीहरू आफै लगाऊँ, प्रयोग गरेर हेरौँ, रोग पनि आफै भगाऊँ, होइन त ?

केही समय यता अति चर्चामा आएको घिउकुमारीको कुरा गरौँ न । औषधि पसलदेखि किराना पसल सबैतिर घिउकुमारीको जुस, जेल, साबुन, क्रिम सबै पाइन थालेका छन्। धमाधम औषधि कम्पनीहरूले घिउकुमारीका नयाँ-नयाँ योगहरू पेटेन्ट गरिरहेका छन् । आयुर्वेदमा कुमारी नामले वर्णित यस दिव्य जडीको काण्डभित्र रहेको चिप्लो भागले धेरै काम गर्दछ। रक्त विकार नाश गर्न, मुटुको रोग ठीक गर्न, महिलाहरूमा महिनावारीको समयमा हुने कष्टार्तव हटाउन, छालालाई सुन्दर र मुलायम बनाउन, रोग प्रतिरोधात्मक शक्ति बढाउन धेरै नै सहयोग गर्दछ। त्यसैकारणले त आज मानिसहरू यसबाट बनेका औषधिहरू प्रयोग गर्न लालायित भइरहेका छन् । बुझेर नबुझेर धेरैले गमलामा घिउकुमारी लगाइरहेका छन् । अब तपाईं हामी पनि किन पछि पर्ने ? आउनुहोस्, पाठकवृन्दकै लाभार्थ यस अंकमा घिउकुमारीका केही फाइदाजनक र प्रयोगात्मक पक्षहरूको चर्चा गर्न गइरहेका छौँ ।

उत्तरी अफ्रिका, कनारी द्वीप समूह तथा स्पेनबाट उत्पत्ति भएर पश्चिमी द्वीप समूह, भारत, नेपाल र चीनमा फैलिएको घिउकुमारीलाई संस्कृतमा कुमारी, गृहकन्या, घृतकुमारी, ग्वारपाठा आदि नामले चिनिन्छ । पातभित्र घिउसमान चिप्लो मज्जा हुने भएकोले यसलाई घृतकुमारी भनिन्छ। यही पातलाई काटेपछि पहेँलो रंगको रस निस्कन्छ तर केही समयपछि उक्त रस जम्न थाल्छ र गाढा बन्दछ जसलाई 'कुमारीसार', 'मुसब्बर' वा 'एलुआ' भनिन्छ ।

भावप्रकास निघण्टुमा यसको वर्णन गर्दै भनिएको छ–

'कुमारी भेदनी शीता तिक्ता नेत्र्या रसायनी ।<br>
मधुरा बृंहणी बल्या वृष्या वातविषप्रणुत् ।<br>
गुल्मप्लीहयकृद्वृद्धिकफज्वरहरी हरेत् ॥<br>
ग्रन्थ्यग्निदग्धविष्फोटपित्तरक्तत्वगामयान् ।'

(भा.प्र.२३३)

घिउकुमारी दस्तावर (पेट सफा गर्ने), भेदनी (Thrombolytic Action), शीतल, तीतो, आँखाको लागि हितकर, रसायन, मधुर, पुष्टिकारक, वीर्यवर्द्धक हुनुका साथै वात, विष, गुल्म, फियो (Spleen), कलेजो (Liver), अण्डवृद्धि, कफज्वर, ग्रन्थि, अग्निदाह, दाह, घाउ-खटिरा र छालासम्बन्धी रोग नाशक छ ।

**प्रयोग विधि :**

–यसको स्वरस (Expressed Juice) १० देखि २० मि.लि. र पाउडर ०.१ देखि ०.३ ग्रामसम्म प्रयोग गर्नुपर्दछ ।

–रेचन अर्थात् दिसा लगाउन (Purgation) को लागि क्षार तथा अन्य वातहर द्रव्य मिलाएर प्रयोग गर्नुपर्दछ ।

–आर्तवजननका लागि रज:कालभन्दा एक हप्ता अगाडिदेखि नै सेवन गर्नुपर्दछ ।

यसमा Hydroxyanthraquinone बाट बनेको एलोइन (Aloin) नामक रासायनिक पदार्थ पाइन्छ । यसका अतिरिक्त राल तथा सुगन्धित तेलहरू पनि पाइन्छन् ।

**प्रयोगहरू :**

१. पत्रमज्जा स्निग्ध र पिच्छिल भएका कारण बल्य र पुष्टिकारक हुन्छ। त्यसैले यो बल बढाउन, रोग प्रतिरोधात्मक क्षमता बढाउन पत्रमज्जाको पाक बनाएर सेवन गर्न सकिन्छ ।

२. बजारमा प्रचलित कुमारीको जुस (Aloe Vera Juice) ले रक्त शोधकको रूपमा तथा कब्जियतनाशक (Constipation) को रूपमा प्रभावकारी कार्य गर्दछ ।

३. कुमारीको भित्री भाग (मज्जा) मा बेसार मिसाएर तातो बनाएर शोथ वेदना तथा फियो वृद्धिमा प्रयोग गर्न सकिन्छ ।

४. यसको स्वरस सुन्निएको नेत्रमा प्रयोग गरिन्छ ।

५. पाचन प्रणालीका रोगहरू जस्तैः अग्निमान्द्य, उदररोग, गानो, फियो-कलेजो सुन्निएको, उदरशूल, कब्जियत तथा कृमीरोगमा यसको स्वरस प्रयोग गरिन्छ ।

६. शोथ (Swelling) मा उपयोगी छ । घाउ खटिरामा यसको मुसब्बरको लेप लाभदायक छ ।

७.शुक्र दौर्बल्यमा यसको स्वरस तथा महिनावारी गडबडी विशेष गरेर कष्टार्तव (Dysmenorrhoea) भएमा एलुआ प्रयोग गरिन्छ ।

८. अल्प मात्रामा कुमारी दीपन, पाचन, भेदन, कलेजो (Liver) उत्तेजक तथा बढी मात्रामा विरेचन अर्थात् दिसा लगाउने (Purgative) र कृमिघ्न छ ।

९. कुमारी रक्तशोधक भएका कारण रक्तविकारमा प्रयोग गरिन्छ । रगतमा बन्ने विकार (Thrombus) हरूलाई फुटाउन सक्ने गुण (Thrombolytic Action) भएकोले हृदयाघातमा प्रयोग गर्न सकिन्छ ।

१०. सौन्दर्य क्षेत्रमा त यसको छुट्टै महत्त्व छ। घिउकुमारीको पत्र मज्जा प्रयोग गर्नाले वा यसबाट बनेका साबुन, क्रिम प्रयोग गर्नाले छालामा निखारता र चमकता आउँछ ।

११. मूत्रकृच्छ्र (Painful Urination) मा कुमारीस्वरस लाभदायक छ ।

**नवीन अनुसन्धान**

– घिउकुमारीमा पाइने एन्थ्राक्युनोन नामक रसायनले विशेष गरेर जनैखटिरा भाइरस (HSV-1) विरुद्ध कार्य गर्दछ। Acemannan नामक तत्त्वले भाइरसलाई बढ्नबाट रोक्दछ ।

– कुमारीको पत्र मज्जामा त्यस्ता तत्त्व हुन्छन् जसले एन्टिबडी बनाउन तथा रोगका कीटाणु मार्न मद्दत गर्दछ जसका कारण यसले रोग प्रतिरोधात्मक शक्ति वृद्धि गर्दछ ।

– घिउकुमारीले मेलिगनेन्ट क्यान्सर हुनबाट बचाउने तथ्य पत्ता लागेको छ ।

–घिउकुमारीको निरन्तर सेवनले शरीरमा भएका अनावश्यक बोसो पदार्थ घटाउँछ जसका कारण मोटोपना तथा मुटुका रोगहरूबाट बच्न सकिन्छ ।

**घिउकुमारीका औषधिहरू**

बजारमा कुमार्यासव, कुमारिकावटी, रजःप्रवर्त्तनी वटी, कुमारीपाक आदि नामका औषध योगहरू पाउन सकिन्छ ।

**उपद्रव** :

आफैमा धेरै गुणहरूको भण्डार भएको कुमारीको प्रयोग गर्दा भने केही सावधानी अपनाउनुपर्ने हुन्छ । दिसा लगाउन प्रयोग गरिने कुमारीबाट बनेका औषधिहरू लगातार दश दिनसम्म प्रयोग गर्दा कब्जियतलाई नै बिगार्ने गर्दछ । साथै शरीरमा कुमारीको निर्भरता पनि बढाउँछ। धेरै लामो समयसम्मको प्रयोगले शरीरमा पोटासियम नामक खनिजको पनि कमी गराउँछ । बच्चा र गर्भवती महिलाहरूले पनि कुमारीको प्रयोग गर्नु हुँदैन । साथै, पेटका आन्द्रामा अल्सर भएका, एपेन्डिसाइटिस भएकाहरूले पनि कुमारीको चोप सीधै खानुहुँदैन ।

जय गुरुदेव !

# आफ्नो हात आफै हेरौं

यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार मानिसको हातमा रहेका विभिन्न पर्वतहरूको बारेमा हामीले चर्चा गर्दै आइरहेका छौं । प्रत्येक पर्वतको आफ्नै महत्त्व र स्वभाव रहेको हुन्छ जसअनुसार यस अंकमा पनि केही पर्वतहरूको बारेमा चर्चा गरिएको छ। यो लेख पढेर तपाईं पनि आफ्नो हातमा रहेका पर्वतहरूको स्थितिबारे अध्ययन गरी आफ्नो स्वभावबारे जान्न सक्नुहुन्छ । यस स्तम्भको बारेमा कुनै प्रतिक्रिया भए हामीलाई पठाउन सक्नुहुनेछ ।

## प्लूटो

अंग्रेजीमा यस ग्रहलाई प्लूटो तथा हिन्दीमा 'इन्द्र' नामले जानिन्छ। हातमा यसको क्षेत्र हृदय रेखाको मुन्तिर तथा मस्तिष्क रेखाको मास्तिर हुन्छ र यो हर्षल पर्वत तथा गुरु क्षेत्रको बीचमा अवस्थित हुन्छ । प्रत्येक व्यक्तिको हातमा यस पर्वतलाई स्पष्टसँग देख्न सकिन्छ ।

यसको प्रभाव भनेको व्यक्तिको वृद्धावस्थामा मात्र देख्न सकिन्छ। यदि यो पर्वत राम्रोसँग विकसित छ भने त त्यस व्यक्तिको प्रौढावस्था आफैमा अत्यन्तै सुखी एवं सफल हुन्छ । जीवनको बयालीस वर्षपछि व्यक्तिले जीवनमा सुखको अनुभव गर्न लाग्दछ र मृत्युपर्यन्त ऊ सबै दृष्टिले सुखी रहन्छ। यदि प्लूटो पर्वतमा क्रसको चिह्न छ भने उसको मृत्यु पैंतालीस वर्षभन्दा पहिले नै दुर्घटनाबाट हुन्छ ।

यो पर्वत आवश्यकताभन्दा बढी विकसित छ भने त्यो व्यक्ति असभ्य, मूर्ख, निरक्षर तथा अपव्ययी हुन्छ । यस्तो व्यक्तिले जीवनमा पल-पलमा कठिनाईहरूको सामना गर्नु पर्ने हुन्छ तथा उसलाई जीवनमा परिवार र मित्रहरूको कुनै पनि प्रकारको सहयोग प्राप्त हुँदैन ।

यदि यो पर्वत अविकसित छ भने त्यो व्यक्ति भाग्यहीन मानिन्छ। उसको स्वभाव चिडचिडे तथा दु:खमय हुन जान्छ ।

## राहु

हातमा यस पर्वतको स्थिति मस्तिष्क रेखाभन्दा तल चन्द्र, मङ्गल तथा शुक्रले घेरिएको भूभागलाई राहु क्षेत्र भनिन्छ । भाग्य रेखा यस पर्वत भएर शनि पर्वततर्फ जान्छ ।

यदि हातमा राहुको क्षेत्र अत्यन्त पुष्ट तथा उन्नत छ भने यस्तो व्यक्ति निश्चय नै भाग्यमानी हुन्छ र यदि पुष्ट पर्वत भएर भाग्यरेखा स्पष्ट तथा गहिरो भएर अघि बढ्छ भने त्यो व्यक्ति जीवनमा परोपकारी, प्रतिभावान्, धार्मिक तथा सबै प्रकारले सुख भोग्ने हुन्छ। यदि हातमा भाग्य रेखा टुटेको छ तर राहु पर्वत विकसित छ भने यस्तो व्यक्ति एकपटक आर्थिक दृष्टिले अत्यन्तै माथि उठ्दछ र फेरि उसको पतन हुन्छ ।

यदि यो पर्वत आफ्नो स्थानबाट हटेर हातको मध्य भागतिर सर्दछ भने त्यस व्यक्तिले यौवनकालमा अत्यन्तै धेरै नराम्रो दिन देख्नु पर्ने हुन्छ। यदि हातको बीचको भाग गहिरो छ र यसबाट भएर भाग्य रेखा टुटी अगाडि बढ्दछ भने त्यो व्यक्ति यौवनकालमा भिखारी समान जीवन व्यतीत गर्दछ ।

यदि राहु पर्वत कम उठेको छ भने यस्तो व्यक्ति चंचल स्वभावको तथा आफ्नै हातले आफ्नो सम्पत्ति नाश गर्ने हुन्छ ।

## केतु

हातमा यस पर्वतको स्थान मणिबन्धको माथि शुक्र र चन्द्र क्षेत्रलाई विभाजित गरेर भाग्य रेखाको

प्रारम्भिक स्थानको समीप हुन्छ । यस ग्रहको फल राहुको समान नै देखिन्छ ।

यस ग्रहको प्रभाव जीवनको पाचौं वर्षदेखि बीसौं वर्षसम्म रहन्छ । यदि यस पर्वत स्वाभाविक रूपले उन्नत एवं पुष्ट हुन्छ भने तथा भाग्य रेखा पनि स्पष्ट तथा गहिरो छ भने त्यो व्यक्ति भाग्यशाली हुन्छ तथा आफ्नो जीवनमा समस्त प्रकारका सुखको भोग गर्दछ । यस्तो बालक गरीब घरमा जन्म लिएर पनि धनी भएको देखिएको छ । यदि यो पर्वत अस्वाभाविक रूपले उठेको छ र भाग्यरेखा कमजोर छ भने उसलाई बालककालमा धेरै नराम्रो दिन देख्नु पर्ने हुन्छ। उसको घरको आर्थिक स्थिति बिस्तारै बिस्तारै कमजोर भएर जान्छ तथा शिक्षाको लागि पनि यस्तो बालकले धेरै अप्ठ्याराहरूको सामना गर्नु पर्ने हुन्छ । यस्तो बालक बालककालमा रोगी पनि हुन्छ ।

यदि यो पर्वत अविकसित छ र भाग्य रेखा प्रबल छ भने त उसको जीवनमा दरिद्रता कहिले पनि हट्दैन । केतु पर्वत विकसित छ र साथसाथै भाग्य रेखा पनि स्पष्ट र विकसित छ भने व्यक्तिले पूर्णरूपमा उन्नति गर्न सक्दछ । क्रमश:

जय गुरुदेव !

## २०६६ आषाढ महिनामा पर्ने चाडपर्व

| | |
|---|---|
| **आषाढ १ गते** | **श्री शिव गोरक्ष हवन** |
| **आषाढ २ गते** | **तान्त्रोक्त वटुक भैरव हवन**<br>अष्टमी, गोरखकाली पूजा |
| **आषाढ ३ गते** | **तान्त्रोक्त महालक्ष्मी हवन,**<br>**तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| **आषाढ ४ गते** | **तान्त्रोक्त वगलामुखी हवन,**<br>**तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| आषाढ ५ गते | योगिनी एकादशी |
| आषाढ ६ गते | प्रदोषव्रत |
| **आषाढ ७ गते** | **दिव्य गुरु महोत्सव** |
| आषाढ १६ गते | अष्टमी, गोरखकाली पूजा |
| **आषाढ १९ गते** | **महाप्रयाण दिवस**<br>हरिशयनी एकादशी,तुलसी रोप्ने दिन |
| **आषाढ २३ गते** | **गुरु पूर्णिमा** |
| आषाढ २० गते | प्रदोषव्रत |
| आषाढ ३१ गते | अष्टमी, गोरखकाली पूजा |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

# शुभकामना

**हाम्रा स्नेही भाइ डा. रामजी बराल तनहुँ खैरेनीटार निवासी सूश्री कविता पौडेलसँग गत वैशाख २० गते वैवाहिक जीवनमा बाँधिनुभएको सुखद अवसरमा उहाँहरुको सुखद दाम्पत्य जीवनका लागि परम आराध्य सद्गुरुदेवहरुको चरणकमलमा प्रार्थना गर्दछौं ।**

खगराज बराल, केदार बराल, ईश्वर थापा, बसन्त बराल, विष्णुमाया वराल, वर्षा बराल, वरदान बराल तथा
**सिद्धाश्रम शक्ति केन्द्र**
**सम्पर्क कार्यालय रामघाट, पोखरा परिवार**

# सुवर्ण अवसर

गोरक्ष निखिल वाणी पत्रिका एउटा सम्पूर्ण पत्रिका भएकोले पाठक वर्गहरुको विशेष अनुरोधमा यसका पुराना अंकहरुलाई संकलन गरेर हरेक वर्षको भिन्दाभिन्दै बण्डल विशेष छुटमा उपलब्ध गराइएको छ । यी अंकहरु सीमित मात्रामा (स्टक रहुञ्जेल सम्म) मात्रै उपलब्ध हुने भएकोले आजै आफ्नो प्रति सुरक्षित राख्नुहोला ।

**सम्पर्क–**
**केन्द्रीय कार्यालय वितरण कक्षमा**
**दिउँसो २:०० बजेदेखि ६:०० बजेसम्म**

# परमपूज्य सद्‌गुरुदेवको अवतरण यात्रा

यस स्तम्भअन्तर्गत परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमशः प्रकाशित गर्दै आएका छौँ । आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।

## अद्वितीय पारद विज्ञानी, श्रेष्ठ रसायनज्ञ

हाम्रा योगीहरूले धातु परिवर्तन गरेर एकपटक होइन हजारौँपटक देखाउनुभएको छ । पारदको एक-दुई वा पूरै १०८ संस्कारलाई बुझ्ने र त्यसलाई सम्पन्न गर्न सक्ने व्यक्ति आज कोही पनि छैन । त्यसैले, आज पदार्थ परिवर्तन सपनाजस्तै पो भएको छ । यस्तो परिस्थितिलाई बुझेर परमपूज्य सद्‌गुरुदेवले पारद विज्ञानका १०८ संस्कारको नाम र विधिलाई एकपटक नभई कैयौँ पटक स्पष्ट गरेर देखाउनुभएको छ ।

पारदलाई शिव-वीर्य मानिन्छ । यसलाई बाँधेर पारद शिवलिंगको निर्माण गर्नु अत्यन्त नै दुष्कर कार्य मानिन्छ । गुरुदेवले पारद शिवलिंगलाई बनाएर आफ्ना शिष्यहरूलाई कृपापूर्वक प्रदान गर्नुभएको छ। १४ देखि १६ किलोको पारद शिवलिंगको निर्माण सम्भव भए पनि २१ किलोलाई एउटै स्थानमा, एउटै रूपमा बाँध्नै सकिन्न। तर पूज्य गुरुदेवले २१ किलोका कैयौँ पारद शिवलिंगको निर्माण गर्नुभएको छ ।

नागार्जुनले धेरै वर्ष पहिले सुनको एक प्रकारको रासायनिक झोल तयार गरेका थिए जसको सेवनले रोगहरूमाथि सदाका लागि विजय पाउन सकिन्थ्यो । यो विधि कालान्तरमा भारत हुँदै मिश्र पुग्यो । त्यसपछि हामीले यस विद्यालाई बिर्स्यौँ । यति मात्र होइन, रसायन विद्याको चमत्कारबाट हाम्रा ग्रन्थहरू भरिएका छन् तर आज हामीलाई भने ती धातुहरू, प्रयोगहरूको नाम मात्र पनि जानकारी छैन ।

पूज्य गुरुदेवको निर्देशनमा अमृतवल्लीको नवीनतम खोज मानव जातिका लागि आश्चर्यजनक वरदानस्वरूप भएको छ र कायाकल्पको दृष्टिले त यो अद्वितीय नै छ । गुरुदेवले यसलाई आधुनिक स्वरूप दिनुभयो । यस बीजको

एउटा चाखलाग्दो परीक्षण पनि भएको थियो । अमृतवल्लीको बीजलाई झिकियो । बीजलाई झिकेपछि जब त्यो बीज स्वत: द्रव्यरूपमा परिणत भयो तब त्यसलाई सिरिन्जमा राखेर ६९ वर्षीय एकजना वृद्धको नाडीमा इन्जेक्शन दिइयो ।

उसलाई रात परेपछि सुत्न दिइयो । रातभरि उसलाई प्यास लागिरहेको हुनाले उसलाई उमालेको स्वच्छ पानी पिलाइँदै गरियो । प्रात:कालसम्म उसको शिरको आधाभन्दा बढी सेतो कपाल कालो भइसकेको थियो, अनुहारका चाउरीपना गइसक्न लागेको थियो र आँखामा नयाँ चमक तथा ओज देखिन्थ्यो ।

केवल एउटा इन्जेक्शनबाट नै उसको शरीरमा आश्चर्यजनक रसायनिक परिवर्तन भइरहेको थियो । तीन दिनपछि त ऊ ४० वर्षको जस्तो देखिन्थ्यो ।

परमपूज्य सद्गुरुदेवको यो परम अनुकम्पा नै हो कि उहाँले रसायनको क्षेत्रमा यी सबै प्रक्रियाहरूलाई प्रकाशित गर्नुभयो, सम्झाउनुभयो र सिकाउनुभयो । आगामी समयमा हामी सबैलाई यस कुराको बोध हुनेछ कि संसारमा हजारौँ वर्षमा एकपटक मात्र यस्तो व्यक्तित्वको आगमन भएको थियो जसले यति धेरै क्षेत्र र यति धेरै ज्ञान धारण गर्नुभएको थियो । यो हाम्रो सौभाग्य हो कि परमपूज्य सद्गुरुदेव सशरीर हामीबीच उपस्थित हुनुहुन्थ्यो । हामीले उहाँको चरणमा बसेर रसायन विद्याजस्तो गरिमामय विषयलाई अवश्यै हृदयंगम गर्नुपर्दछ । जय गुरुदेव !

# योग र वियोग

शास्त्रवर्णित सत्य युगको कल्पना गरौँ जहाँ तपस्याले ओतप्रोत ऋषिहरूको जमात हुन्थ्यो, सत्यवादीहरूको समाज हुन्थ्यो । दिव्य दैवी ऊर्जाले, तपोऊर्जाले सारा मानिसका वृत्तिहरू, घमण्ड, अहंकार सबै नाश भइरहेका हुन्थे । एक अर्कामा प्रेम, दया, माया, स्नेह हुन्थ्यो । मानव र मानवबीच, मानव र प्रकृतिबीच, मानव र अन्य प्राणीहरूबीच सबैतिर योग नै योग, आनन्द नै आनन्द हुन्थ्यो, वियोगका धेरै कम उदाहरणहरू पाइन्थे ।

तर आजको समाजलाई हेरौँ । बितेका हजारौँ जन्मका कल्मष, कर्मदोष आदिको कुनै प्रवाह छैन, आउँदा हजारौँ जन्मका लागि आवश्यक पर्ने पुण्यकर्म, आत्मिक खजानाको कुनै चिन्ता छैन । छ भने केवल पृथ्वीतटमा ६०-७० कति वर्ष बाँच्ने हो त्यसैका लागि मात्र ठूलो चिन्ता छ । लाखौँ-करोडौँको बैंक ब्यालेन्स, घरै नहुनेलाई घर, घर हुनेलाई कार, कार हुनेलाई हेलिकप्टर आदि आदि तृष्णैतृष्णा । योग भइरहेको छ भने केवल पैसासँग, क्षणिक सुखसँग मात्र भइरहेको छ । पैसा, यश, आराम, सम्मान र मोजमस्तीसँगको योगका लागि कतिको बुबा आमासँग वियोग भएको छ, कतिको भाइसँग वियोग भएको छ, कतिले श्रीमती छाडेका छन्, कतिले मान्छे मारेका छन्, साथी, नाता, कुटुम्ब, परस्त्री र परपुरुषको त के कुरा गर्ने र ? जसको जो सँग, जे सँग योग हुनुपर्ने हो त्यो सँग वियोग भइरहेको छ, जे सँग वियोग हुनुपर्ने हो त्यो सँग योग भइरहेको छ । आखिर यही त हो वियोगको पराकाष्ठा ।

सारा मानवको शारीरिक बनावट एउटै, रगतमा हुने आर.बि.सी., डब्लु.बि.सी., हेमोग्लोबिन सबै एउटै तर किन सबैमा वियोगले घर गरिरहेको छ । अरूप्रति गरिएको सा-साना सेवा र सहयोगमा पनि आफ्नो नाम, स्वार्थ र फाइदा हेरिएको पाइन्छ । सारा प्राणी एउटै परमात्माका अंश ! योग हुनुपर्ने उनै परमात्मासँग, योग हुनुपर्ने ती सबै परमात्माका सन्ततिहरूमा । तर पृथ्वीतटमा भने एकले अर्कालाई स्वीकार्न नहुने, एकले अर्कोलाई प्रेम गर्ने नहुने छुट्टाछुट्टै परमात्माहरूको छुट्टाछुट्टै जमात् तयार भइरहेका छन् !

आखिर सबै परमात्माका सन्तति हौँ भने उनै परमात्माका नाममा किन यत्रो झगडा, मनमुटाव र वियोग । सबै आफ्नै डम्फु ठोक्न र अरूको प्रगति रोक्न किन चाहन्छन् ? हिन्दुहरूले शिवलाई पूर्ण मानेका छन्, विष्णुलाई, कृष्णलाई र रामलाई पनि, बुद्धिष्टहरूले बुद्धलाई, मुस्लिमहरूले अल्लाहलाई, क्रिश्चियनहरूले ईसा मसीहलाई, जैनहरूले महावीरलाई, शिखहरूले गुरु नानकलाई । यस्तैयस्तै जति छन् सबैले आफ्ना आराध्यलाई पूर्ण परमात्मा मानेका छन् । सबै तपस्वी, सबै पूर्ण, सबै सद्गुरुहरू योग स्वरूपमा, एउटै ॐकार, निराकार रूपमा, अनन्दस्वरूपमा तर उनैका सन्ततिहरू किन वियोग स्वरूपमा, बेचैनी र छटपटाहट स्वरूपमा ? केलाएर हेर्ने हो भने एउटै निचोड निस्कन्छ– चेतनाको अभाव, चेतनास्तरको कमी, चित्तवृत्तिनिरोधको अभाव ।

हाम्रो पनि चेतनास्तर, तपस्या शक्ति माथिल्लो स्तरको हुने हो भने अवश्य पनि योगको मर्मलाई बुझ्थ्यौँ होला, रामलाई, कृष्णलाई, बुद्धलाई, ईसालाई चिन्थ्यौँ होला, तिनै योगीहरूबीचको योगलाई अनुभव गर्न सक्थ्यौँ होला । तर तपस्याकै अभाव, चेतनास्तरकै अभावका कारण रामभक्त भएर राम चिन्न सक्दैनौँ, कृष्ण मानेर कृष्णको प्रेमरसको आस्वादन गर्न सकिरहेका हुँदैनौँ, बुद्धिष्ट भएर बुद्धको मर्म बुझ्दैनौँ, मुस्लिम भएर मुहम्मद पैगम्बरको आदेश बुझ्न सकिरहेका हुँदैनौँ, सद्गुरुका शिष्य भएर शिष्य धर्ममा बस्न सकिरहेका हुँदैनौँ । आफूले जसलाई आराध्य मानिरहेका छौँ उनैको धर्म र मर्म त बुझ्न सक्दैनौँ, उहाँसँग कुरा गर्न सकिरहेका छैनौँ, उहाँहरूसँग योग भएको छैन भने अरू धर्मावलम्बी, अन्य मानिस, अन्य प्राणीसँगको योग, प्रेम, ममता र स्नेहको त कसरी कल्पना गर्न सकिन्छ र ?

त्यसैले त महायोगी गुरु गोरखनाथले बारम्बार भन्नुभएको छ– हिन्दुहरू मन्दिर धाउँछन्, मुस्लिमहरू मस्जिद धाउँछन् तर योगीहरू न त मन्दिर धाउँछन् न त मस्जिद नै । उनीहरू त केवल परमात्मासँगको योगस्वरूपमा, आनन्दस्वरूपमा निमग्न भएर अमृत पान गरिरहेका हुन्छन् । वास्तवमा यही नै योगको स्वरूप हो जहाँ न कुनै धर्म हुन्छ न कुनै गुट हुन्छ, न त कुनै मन्दिर न कुनै मस्जिद । सारा प्राणी, सारा सृष्टि संरचना उनै परामात्माको अंश, भित्री रूपमा सबै आत्मस्वरूप, ॐकार स्वरूप । सबैमा प्रेम, दया, माया, स्नेह र सुन्दर संसारको स्थितिमा मात्र, यही अवस्थामा मात्र वियोगको पराकाष्ठा नाश हुन सक्छ, योगको महिमा सार्थक हुन सक्छ । त्यसका लागि सबैमा चेतनास्तर माथि उठ्नु जरुरी भइसकेको छ, अज्ञानता, जडता समाप्ति हुनु आवश्यक भइसकेको छ । जबसम्म सक्षम सद्गुरुहरूबाट प्राप्त चित्तवृत्तिनिरोधका साधनाहरू, ध्यान, मन्त्रजप, योग, आयुर्वेदजस्ता माध्यमहरूबाट मनका वृत्तिहरू समाप्त हुँदैनन्, चेतनास्तर बढ्दैन तबसम्म मनमा नाना शंका, उपशंका, घमण्ड, अहंकार, स्वार्थ, व्यभिचारले घेरिरहन्छ, घर गरिरहन्छ योगै नहुनु पर्नेसँग योग भइरहेको हुन्छ, आनन्दको सट्टा बेचैनी र छटपटाहट भइरहेको हुन्छ, योग हुनु पर्नेसँग वियोग भइरहेको हुन्छ । जय गुरुदेव !

# आषाढ महिनाको सूक्ष्म काल विवरण

**आदरणीय पाठकवृन्द, विभिन्न महिनाका विभिन्न बारहरुमा पर्ने कालहरुको जानकारी तथा सूक्ष्म काल निर्णयका सम्बन्धमा विगतका अङ्कहरूमा प्रकाशित गरिएको थियो । यस अंकमा आषाढ महिनामा पर्ने विभिन्न चारवटा कालहरुको पनि ५-५ मिनेटको अन्तरालको फलहरुलाई प्रस्तुत गरिएको छ जसलाई हेर्न सँगै दिइएको तालिकालाई आधार बनाउनु होला ।**

## आषाढ महिनाको महेन्द्र काल

१ देखि ५ मिनेटसम्म : यात्रा, विवाह, व्यापार कार्य, मित्रता, उन्नति कार्य आदिका लागि यस समयको छनौट गर्नुपर्दछ । यस समयका अधिष्ठात्रा 'मरुत' हुन्, तिल खानु शुभ मानिएको छ ।

६ देखि १० मिनेटसम्म : शुभ कार्य एवं व्यापारका लागि सर्वथा अनुकूल छ । यस कालका स्वामी 'शिव' हुन्, कार्य प्रारम्भ गर्नुपूर्व धनियाँ खानु अनुकूल रहन्छ ।

११ देखि १५ मिनेटसम्म : यात्राको दृष्टिबाट यस समयको विशेष महत्त्व छ, यस समयका अधिष्ठाता 'गणेश' हुन् । अतः गणेशको स्मरण गरेर यात्रा प्रारम्भ गर्नुपर्दछ । दूबो चपाउनु शुभ मानिएको छ ।

१६ देखि २० मिनेटसम्म : उन्नति कार्य, विवाह, प्रणय, प्रेम प्रदर्शन, लाभ कार्य, खेल, यात्रा आदिका लागि यो समय शुभ छ । यस समयका अधिष्ठाता 'कामदेव' हुन्, मह खाएर कार्य प्रारम्भ गरियो भने विशेष शुभ रहन्छ ।

२१ देखि २५ मिनेटसम्म : व्यापार कार्यका लागि यो समयको छनौट विशेष शुभ रहन्छ, यस समयकी अधिष्ठात्री 'लक्ष्मी' हुन्, दूध प्रसाद खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

२६ देखि ३० मिनेटसम्म : यात्रा, जुवा, हानि-लाभ, सट्टा, भाग्य परीक्षा, मित्रता, लाभदायक कार्य आदिका लागि यो समय उचित छ । यस समयका स्वामी 'कार्तवीर्यार्जुन' हुन्, दही खानु शुभ मानिएको छ ।

३१ देखि ३५ मिनेटसम्म : यात्रा, विजय कार्य, धन संग्रह, किनमेल र शुभ कार्यका लागि यो समय अनुकूल छ । यस समयका अधिष्ठाता 'ब्रह्मा' हुन्, पान खाएर कार्य प्रारम्भ गर्नु शुभ रहन्छ ।

३६ देखि ४० मिनेटसम्म : कुनै पनि प्रकारको यात्रा एवं सफलताका लागि यो समय विशेष शुभ एवं अनुकूल छ । यस समयका देवता 'सूर्य' हुन्, सख्खर खाएर यात्रा अथवा कार्य प्रारम्भ गर्नुपर्दछ ।

४१ देखि ४५ मिनेटसम्म : व्यापार, सफलता, शिक्षा, खेल, प्रणय प्रसङ्ग, विवाह तथा यात्रा आदिका लागि यस समयलाई छनौट गर्नुपर्दछ । यस समयका देवता 'गौतम' हुन्, पान चपाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

४६ देखि ५० मिनेटसम्म : यात्रा, शुभ कार्य, कुरा छिन्ने, विवाह, माङ्गलिक कार्य, व्यापारिक कार्य, जुवा आदिका लागि यो समय अनुकूल र शुभ छ । यस समयका देवता 'चन्द्र' हुन्, दही खानु शुभ मानिएको छ ।

५१ देखि ५५ मिनेटसम्म : भाग्योदय, चुनाव, परीक्षा दिने, सफलतासम्बन्धी कार्य, स्थिर कार्य, भाग्योदयका लागि यस समयको छनौट गर्नुपर्दछ । यस समयका स्वामी 'विष्णु' हुन्, चामल खाएर कार्य प्रारम्भ गर्नु विशेष शुभ मानिएको छ ।

५६ देखि ६० मिनेटसम्म : कुनै पनि प्रकारको उन्नति, व्यापार, जागिर, यात्रा आदिका लागि यस समयलाई छनौट गर्नु शुभ मानिएको छ । यस समयकी अधिष्ठात्री 'गौरी' हुन्, हरिद्रा खानु शुभ मानिएको छ ।

## आषाढ महिनाको अमृत काल

१ देखि ५ मिनेटसम्म : परीक्षा, चुनाव, अन्तर्वार्ता तथा यात्रा आदिका लागि समय शुभ छ । यस समयका अधिष्ठाता 'चन्द्र' हुन्, दही खाँदा शुभ हुन्छ ।

६ देखि १० मिनेटसम्म : जुवा, व्यापार, यात्रा आदिका लागि समय उपयुक्त छ । यस समयका देव 'शनि' हुन्, तिल खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

११ देखि १५ मिनेटसम्म : यात्रा, महत्त्वपूर्ण र उन्नति कार्यहरूका लागि यस समयको छनौट राम्रो हुन्छ । यस समयका देवता 'रुद्र' हुन्, कार्य प्रारम्भ गर्नु अगाडि सख्खरको प्रयोग शुभ मानिएको छ ।

१६ देखि २० मिनेटसम्म : यात्राका लागि यो समय शुभ छ । यसका देवता 'गणपति' हुन्, सख्खरको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

२१ देखि २५ मिनेटसम्म : यात्रा, स्थायित्वसम्बन्धी कार्य, व्यापार प्रारम्भ मुहूर्त आदिका लागि यस समयको छनौट शुभ छ । यस समयकी देवी 'लक्ष्मी' हुन्, दूध प्रसाद

# दोस्रो भाग अन्तर्गत (ज्येष्ठ र आषाढ महिनामा) पर्ने विभिन्न कालहरू

| आइतबार | | सोमबार | | मंगलबार | | बुधबार | | बिहीबार | | शुक्रबार | | शनिबार | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* |
| ६:००-८:२४दिन | अमृत | ६:००-७:३६दिन<br>*७:३०-९:००* | अमृत<br>*राहु* | ६:००-७:३६दिन | शून्य | ६:००-६:४८दिन | शून्य | ६:००-७:३६दिन | अमृत | ६:००-६:४८ | अमृत | ६:००-६:४८ | महेन्द्र |
| ८:२४-११:३६ | वक्र | ७:३६-९:१२<br>*७:३०-९:००* | वक्र<br>*राहु* | ७:३६-१०:०० | वक्र | ६:४८-८:२४ | महेन्द्र | ७:३६-१०:०० | वक्र | ६:४८-७:३६ | वक्र | ६:४८-९:१२<br>*९:००-१०:३०* | शून्य<br>*राहु* |
| ११:३६-२:४८ | अमृत | ९:१२-११:३६ | अमृत | १०:००-११:३६ | अमृत | ८:२४-१०:०० | अमृत | १०:००-११:३६ | अमृत | ७:३६-१०:०० | अमृत | ९:१२-१२:२४<br>*९:००-१०:३०* | अमृत<br>*राहु* |
| २:४८-३:३६ | शून्य | ११:३६-६:०० | वक्र | ११:३६-१:१२ | शून्य | १०:००-१२:२४<br>*१२:००-१:३०* | वक्र<br>*राहु* | ११:३६-१:१२ | शून्य | १०:००-१२:२४<br>*१०:३०-१२:००* | वक्र<br>*राहु* | १२:२४-४:२४ | वक्र |
| ३:३६-४:२४ | महेन्द्र | ६:००-८:२४रात्रि | वक्र | १:१२-३:३६<br>*३:००-४:३०* | वक्र<br>*राहु* | १२:२४-१:१२<br>*१२:००-१:३०* | शून्य<br>*राहु* | १:१२-३:३६<br>*१:३०-३:००* | वक्र<br>*राहु* | १२:२४-३:३६ | अमृत | ४:२४-६:०० | शून्य |
| ४:२४-६:००<br>*४:३०-६:००* | शून्य<br>*राहु* | ८:२४-११:३६ | अमृत | ३:३६-४:२४<br>*३:००-४:३०* | शून्य<br>*राहु* | १:१२-२:४८<br>*१२:००-१:३०* | वक्र<br>*राहु* | ३:३६-४:२४ | शून्य | ३:३६-४:२४ | शून्य | ६:००-६:४८ | शून्य |
| ६:००-६:४८रात्रि | शून्य | ११:३६-२:४८ | वक्र | ४:२४-६:००<br>*३:००-४:३०* | अमृत<br>*राहु* | २:४८-५:१२ | अमृत | ४:२४-६:०० | अमृत | ४:२४-६:०० | वक्र | ६:४८-८:२४ | वक्र |
| ६:४८-१०:०० | अमृत | २:४८-३:३६ | महेन्द्र | ६:००-६:४८रात्रि | शून्य | ५:१२-६:०० | शून्य | ६:००-९:१२रात्रि | वक्र | ६:००-७:३६रात्रि | वक्र | ८:२४-९:१२ | महेन्द्र |
| १०:००-१२:२४ | वक्र | ३:३६-६:०० | वक्र | ६:४८-१०:०० | अमृत | ६:००-७:३६रात्रि | वक्र | ९:१२-११:३६ | अमृत | ७:३६-९:१२ | अमृत | ९:१२-१०:४८ | अमृत |
| १२:२४-२:४८ | अमृत | | | १०:००-१२:२४ | वक्र | ७:३६-९:१२ | अमृत | ११:३६-२:०० | वक्र | ९:१२-१०:४८ | शून्य | १०:४८-२:४८ | शून्य |
| २:४८-४:२४ | वक्र | | | १२:२४-२:४८ | अमृत | ९:१२-१२:२४ | वक्र | २:००-४:२४ | अमृत | १०:४८-११:३६ | महेन्द्र | २:४८-३:३६ | अमृत |
| ४:२४-६:०० | महेन्द्र | | | २:४८-५:१२ | वक्र | १२:२४-२:४८ | अमृत | ४:२४-६:०० | वक्र | ११:३६-१:१२ | वक्र | ३:३६-४:२४ | वक्र |
| | | | | ५:१२-६:०० | महेन्द्र | २:४८-६:०० | शून्य | | | १:१२-२:४८ | अमृत | ४:२४-५:१२ | शून्य |
| | | | | | | | | | | २:४८-६:०० | शून्य | ५:१२-६:०० | अमृत |
| | | | | | | | | | | | | | |
| | | | | | | | | | | | | | |

परमपूज्य सद्गुरुदेव डा.नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज)द्वारा रचीत ***'ज्योतिष और काल निर्णय'*** पुस्तकमा आधारित ।

**महेन्द्रकाल- सर्वश्रेष्ठ, अमृतकाल- श्रेष्ठ, वक्रकाल- सामान्य, शून्यकाल- निकृष्ट । शुभकालमा राहुकाल पनि मिसिएको छ भने त्यो समय पनि आफैं अशुभ हुन्छ ।**

सूक्ष्म काल विवेचना गर्नुपर्दा– सर्वप्रथम कुन बार हो र कति बजेको विवेचना गर्नु छ, त्यसअनुसार कुन काल परेको छ (महेन्द्रकाल, अमृतकाल, वक्रकाल वा शून्यकाल) त्यो तालिका हेरेर पत्ता लगाउनु पर्दछ । उदाहरणका लागि २०६६ ज्येष्ठ ३१ गते आइतबार बिहान ७:१३ बजेको सूक्ष्म विवेचना गरौं । आइतबार प्रात: ६:०० देखि ८:२४ बजेसम्म अमृतकालको समय छ । हाम्रो समय अमृतकालमा परेको छ । अब हाम्रो समय ७:१३ बाट हाम्रो काल शुरु भएको समय ६:०० घटाऔं । बाँकी रह्यो १:१३ अर्थात् १ घण्टा १३ मिनेट । अब घण्टा जति भए पनि त्यसलाई छोडिदिएर मिनेटमा मात्र विचार गर्नुहोस्- १३ मिनेट । त्यसपछि ज्येष्ठ महिनाको अमृतकालमा १३ मिनेट कहाँ पर्दछ हेर्नुहोस् । त्यहाँ लेखिएको छ– **११ देखि १५ मिनेटसम्म : कुनै पनि व्यापार कार्यका लागि यो समय शुभ छ । यसका देवता 'नृसिंह' हुन्, लड्डुको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।** अब यहाँ लेखिएअनुसार गर्न सक्नुहुनेछ ।

खाएर गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

२६ देखि ३० मिनेटसम्म :कुनै पनि व्यापार कार्यका लागि यो समय शुभ छ । यसका देवता 'नृसिंह' हुन्, लड्डुको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

३१ देखि ३५ मिनेटसम्म : जुवा, व्यापार प्रारम्भ गर्न, कुनै पनि घर वा पसलको मुहूर्त आदिका लागि यो शुभ समय हो । यसका देवता 'विष्णु' हुन्, सख्खर खानु शुभ हुन्छ ।

३६ देखि ४० मिनेटसम्म : जुवा, व्यापार, व्यवसायका लागि यात्रा, यज्ञ, पूजन, अनुष्ठान आदिका लागि यो समय शुभ छ । यस समयका देवता 'शिव' हुन्, चामलको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

४१ देखि ४५ मिनेटसम्म : यात्रादिका लागि सर्वाधिक उपयुक्त समय छ । यस समयकी अधिष्ठात्री देवी 'सरस्वती' हुन्, मुगीको दाना चबाएर यात्रा प्रारम्भ गर्नु शुभ रहन्छ ।

४६ देखि ५० मिनेटसम्म : स्थायी कार्य, व्यापार, उन्नति तथा यात्रादिका लागि शुभ समय छ । यस समयकी अधिष्ठात्री 'गौरी' हुन्, दूबो चपाउनु शुभ रहन्छ ।

५१ देखि ५५ मिनेटसम्म : यात्रा, व्यापार, उन्नति कार्य एवं समस्त शुभ कार्यका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'विष्णु' हुन्, मीठो पकवान खानु शुभ मानिएको छ ।

५६ देखि ६० मिनेटसम्म : विवाह, कुरा छिन्ने आदिका लागि प्रस्थान, अन्तर्वार्ता, मुद्दा मामिला आदिका लागि यो समय शुभ छ । यस समयका अधिष्ठाता 'हनुमान्' हुन्, सख्खर भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

## आषाढ महिनाको वक्र काल

१ देखि ५ मिनेटसम्म : यात्रादिका लागि यो समय अनुकूल छ । 'मरुत' यसका देव हुन् । सख्खर खाएर जाँदा राम्रो हुन्छ ।

६ देखि १० मिनेटसम्म : जासूसी, भेद ज्ञात गर्ने, सामुन्ने भएको व्यक्तिलाई प्रभावित गर्ने आदिका लागि यो समय ठीक छ । यसका प्रधान देव 'वात' हुन्, चामल खाएर जानुहोस् ।

११ देखि १५ मिनेटसम्म : मित्रता बढाउन, अधिकार प्राप्त गर्न, स्थानान्तरण आदिका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'सूर्य' हुन्, जीराको प्रयोग गरियो भने विशेष अनुकूल रहन्छ ।

१६ देखि २० मिनेटसम्म : जुवा खेल्नको लागि उपयुक्त समय । यसका प्रधान देव 'वरुण' हुन्, दही खाएर यात्रा गर्नुहोस् ।

२१ देखि २५ मिनेटसम्म : प्रेम प्रदर्शन, प्रणय आदिका लागि यस समयको छनौट ठीक रहन्छ । यस समयका प्रधान देव 'कामदेव' हुन्, मह खाएर जानुहोस् ।

२६ देखि ३० मिनेटसम्म : व्यापार आदिका लागि अपेक्षाकृत ठीक छ । प्रारम्भमा विलम्ब र पछि सिद्धि । यसका प्रधान देव 'गरुड' हुन्, हरिद्रा खाएर कार्य प्रारम्भ गरियो भने शुभ रहन्छ ।

३१ देखि ३५ मिनेटसम्म : यात्राका लागि केही बाधकारक तर अन्त्यमा ठीक । यसका प्रधान देव 'अग्नि' हुन्, तोरी चपाएर कार्य गर्दा उत्तम रहन्छ ।

३६ देखि ४० मिनेटसम्म : व्यापार, व्यवसायका लागि सामान्य अनुकूल । यसका प्रधान देव 'चन्द्रमा' हुन्, दही खानु शुभ मानिएको छ ।

४१ देखि ४५ मिनेटसम्म : व्यापारादि कार्यहरूका लागि यो शुभ समय छ । यसका प्रधान देव 'गुरु' हुन्, बेसनको प्रयोग शुभ मानिएको छ ।

४६ देखि ५० मिनेटसम्म : जुवा, दौड, सिनेमा, व्यापार आदिका लागि यो उपयुक्त समय हो । यसका प्रधान देव 'शुक्राचार्य' हुन् । पकवान खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

५१ देखि ५५ मिनेटसम्म : प्रेम, वाद्य, जुवा आदिको लागि शुभ समय छ । यसका प्रधान देव 'पुष्पधन्वा' हुन्, मह खाँदा शुभ हुन्छ ।

५६ देखि ६० मिनेटसम्म : यात्रा आदिका लागि विशेष अनुकूल छ । यसका प्रधान देव 'गणपति' हुन्, सख्खरको प्रयोग शुभ मानिएको छ ।

## आषाढ महिनाको शून्य काल

१ देखि ५ मिनेटसम्म : यात्रादिका लागि विपरीत समय, शुभ कार्यहरूमा वर्जित, 'चित्रगुप्त'लाई स्मरण गर्नुहोस् तथा फूल चपाएर कार्य प्रारम्भ गरियो भने केही अनुकूलता ।

६ देखि १० मिनेटसम्म : शुभ, यात्रादिका लागि अनुकूल, प्रधान देवता 'ब्रह्मा'लाई स्मरण गर्नुहोस्, र दही भक्षण शुभ ।

११ देखि १५ मिनेटसम्म : जुवा, मद्य, घोडा दौड, सौन्दर्य प्रसाधन सामग्री बिक्री, व्यापार आदिको लागि अनुकूल । प्रधान देवता 'विश्वकर्मा' हुनुहुन्छ, सख्खर र घिउ खानु शुभ ।

१६ देखि २० मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं बाधाकारक । 'हिडिम्बा'को ध्यान गर्नुहोस् । घिउको भक्षण शुभ ।

२१ देखि २५ मिनेटसम्म : प्रत्येक कार्यका लागि सामान्य अनुकूल । प्रधान देवता 'मकरध्वज'को स्मरण गर्नुहोस् । तोरी खानु शुभ ।

२६ देखि ३० मिनेटसम्म: प्रत्येक कार्य अथवा यात्रादिका लागि प्रारम्भमा बाधाकारक तर पछि शुभ । तर पनि 'लक्ष्मी'लाई स्मरण गर्नुहोस् । चामल चपाउनु शुभ ।

३१ देखि ३५ मिनेटसम्म : प्रणय प्रसङ्ग, मद्यपान, जुवा, घोडादौड आदिका लागि अनुकूल । 'शुक्राचार्य'को स्मरण गर्नुहोस् र फल खाएर जानुहोस् ।

३६ देखि ४० मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं तनावपूर्ण, तर पनि 'गणपति'लाई स्मरण गरेर र सख्खर खाएर कार्य प्रारम्भ गरिन्छ भने शुभ ।

४१ देखि ४५ मिनेटसम्म : बाधाकारक समय, तर मुद्दा मामिला आदिका लागि शुभ । 'हनुमान्'लाई स्मरण गरेर, सख्खर, घिउ खाएर जाँदा भने अनुकूल ।

४६ देखि ५० मिनेटसम्म : प्रत्येक कार्यका लागि व्यवधानपूर्ण, तर 'गौरी'लाई स्मरण गरेर र दही खाएर कार्य प्रारम्भ गर्दा केही अनुकूलता ।

५१ देखि ५५ मिनेटसम्म : कार्यको प्रारम्भमा तनावहरू, तर पछि स्थितिमा सुधार, प्रधान देव 'अग्नि'को स्मरण र तिल खानु शुभ ।

५६ देखि ६० मिनेटसम्म : जुवा खेल्नका लागि शुभ, यस समयका देवता 'काल' हुन्, मह खाएर गइयो भने अनुकूल ।

जय गुरुदेव !

**तान्त्रिक साधना तान्त्रिक ध्यान**
**मानव जीवनको वास्तविक ज्ञान**

**प्रेरक प्रसंग**

# उपासकको उपासना यस्तो पनि

स्वामी बोधिराज माता कालीका परम भक्त, तपस्वी योगी र साधक थिए । माता कालीको साक्षात् दर्शनका लागि उनले आबूको पहाडमा रहेको 'सिद्ध पीठ'मा घोर तपस्या गरे । करिब एक वर्ष केवल पात-पतिंगर मात्र खाएर जीवनयापन गरे । तर माता कालीको दर्शनको कुरा त परै जाओस्, उनले आभाससम्म पनि पाएनन् ।

तर बोधिराज विचलित भएनन् । उनले निराहार बसेर माता कालीको उपासना गर्ने निधो गरे । तर एक वर्ष बितिसकेर पनि उनलाई क्षणिक आभाससम्म पनि भएन । तब उनी विचलित भए । उनी माता कालीको मूर्तिनजिक नै आत्महत्या गर्न तम्सिए ।

तब उनले गुफामा सिँहको गर्जन सुने– 'जबसम्म तिमी दीक्षित हुँदैनौ, तिमीले गुरु धारण गर्दैनौ तबसम्म माता कालीको दर्शन सम्भव छैन ।'

बोधिराजलाई आफ्नो गल्ती महसुस भयो । उनी शास्त्रविरुद्ध हिँडिरहेका थिए । बिनादीक्षा साधनामा सफलता मिल्छ पनि कसरी ?

त्यसै दिन बोधिराजले विश्ववन्द्य साधक योगीराज प्रज्ञानन्दको चरणमा पुगेर दीक्षा ग्रहण गरे ।

इतिहास साक्षी छ, भोलिपल्ट नै साधना स्थलमा बस्नासाथ उनलाई माता कालीले आफ्नो साक्षात् सशरीर, सतेज, भव्य दर्शन दिनुभयो ।

बोधिराज गद्गद् भए..., भावविह्वल हुन पुगे... । पछि गएर यिनै बोधिराजले 'काली विग्रहार्चन' साधना पद्धतिलाई पत्ता लगाए । यस साधना पद्धतिअनुसार साधना गर्नाले केही घण्टामा नै माता कालीको साक्षात् दर्शन सुलभ हुन्छ ।

जय गुरुदेव ।

# गुरु गीता

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरुप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौँ ।**

**मन्दभाग्या ह्यशक्ताश्च**
**ये जना नानुमन्यते ।**
**गुरुसेवासु विमुखाः**
**पच्यन्ते नरकेऽशुचौ ॥१६५॥**

भावार्थ : गुरुको महत्वलाई न बुझ्ने अथवा गुरुको अनुसरण न गर्ने व्यक्ति अभागी र शक्तिहीन मानिन्छ । गुरु रहित व्यक्ति दुःख भोग गर्दै अपवित्र नरकमा चिरकालसम्म वास गर्दछ , अर्थात् सबै प्रकारका यत्नले गुरु सेवा गर्नु पर्दछ, जति सुकै कष्ट भए पनि गुरु-आज्ञाको पालना गर्नै पर्छ, शिष्य जीवनको सौभाग्यशाली क्षण त्यो हो जुन बेला उ गुरुको सेवामा लागेको हुन्छ ।

**विद्या धनं बलं चैव**
**तेषां भाग्यं निरर्थकम् ।**
**येषां गुरुकृपा नास्ति**
**अधो गच्छन्ति पार्वति ॥१६६॥**

भावार्थ : गुरुकृपा न भएको व्यक्तिको अधोपतन निश्चित छ, यस्ता व्यक्तिको विद्या, धन, बल र भाग्य निरर्थक हुन्छ । जसरी वासना नभएको सुन्दर फूल व्यर्थ मानिन्छ, त्यस्तै समस्त भौतिक पदार्थहरूको शोभा गुरुत्वबाटै छ । यी सबै भोग्य त छन् तर गुरुत्वको अभावमा श्रेयस्कर भने छैनन्, तसर्थ प्रयास गरेर गुरु-कृपा प्राप्त गर्नै पर्छ ।

**गुरुभावः परं तीर्थम्**
**अन्यत्तीर्थं निरर्थकम् ।**
**सर्वतीर्थमयं देवि!**
**श्रीगुरो श्वचरणाम्बुजम् ॥१६७॥**

भावार्थ : गुरु नै सर्वश्रेष्ठ तीर्थ हुन्, अरू तीर्थ निरर्थक हुन् । श्री गुरुका चरण-कमल नै सम्पूर्ण तीर्थमय छन् । जति पनि तीर्थ छन् -काशी, कांची, गया, अवन्तिका अदिमा केही पाउनलाई जानु आयास मात्र हो, ती निर्जीव छन्, निरर्थक छन्, ती आफ्ना उपासकलाई कुनै चैतन्यता दिन सक्दैनन्, बरु यस्को सट्टा जीवित जाग्रत गुरुका चरणमा वसेर सबैथोक पाउन सकिन्छ, तसर्थ गुरु-चरणहरूलाई तीर्थराज मानिन्छ जो श्रेय एवं प्रेय(प्रिय वस्तु) दुवै प्रदान गर्नमा समर्थ हुनुहुन्छ ।

**गुरवो बहवः सन्ति**
**शिष्य वित्तापहारकाः ।**
**तमेकं दुर्लभं मन्ये**
**शिष्य हृत्तापहारकम् ॥१६८॥**

भावार्थ : शिष्यको धन-सम्पत्तिलाई हरण गर्ने गुरु धेरै हुन्छन्, तर शिष्य-हृदयका ताप-संतापहरूलाई हरण गर्ने सद्‌गुरु पाउन दुर्लभ छ । यस युगमा यस्ता पाखंडीहरू थुप्रै छन् जस्ले आफूलाई 'गुरु' शब्दले संबोधित गर्दछन्, तर संबोधन मात्रले कसैमा गुरुत्वको गरिमा आउदैन । गुरुको अर्थ हो- "ज्ञान", जस्ले ब्रह्मज्ञानको प्राप्ति गरि सकेको छ, त्यै गुरु हुन सक्छ, यो ज्ञानको अभावमा गुरुत्व संभव नै छैन ।

**चातुर्यवान् विवेकी च**
**अध्यात्मज्ञानवान् शुचिः ।**
**मानसं निर्मलं यस्य**
**गुरुत्वं तस्य शोभते ॥१६९॥**

भावार्थ : तीब्र बुद्धि, सद् र असद्‌को विवेचना गर्न सक्ने, आध्यात्मिक ज्ञानले परिपूर्ण, भोग र मोक्ष दुवैको प्राप्ति गराउन सक्ने, पावन र निर्मल मन भएको व्यक्ति मात्र गुरु हुन सक्छ । गुरुत्व विशुद्ध र पावनतम रहस्यमय ज्ञान हो, जसलाई पाउनका लागि उपरोक्त गुणहरू हुन आवश्यक छ । यी गुणहरू रहित व्यक्तिमा गुरुत्व आउन नै सक्दैन । समाजलाई र समस्त विश्वलाई तथा प्रत्येक व्यक्तिलाई ज्ञान दिनका लागि सद्‌गुरुको नै आवश्यक्ता हुन्छ ।

**गुरवो निर्मलाः शान्ताः**
**साधवो मितभाषिणः ।**
**काम क्रोध विनिर्मुक्ताः**
**सदाचाराः जितेन्द्रियाः ॥१७०॥**

भावार्थ : गुरु अति शुद्ध, शान्त, साधु स्वभाववाला, कम बोल्ने, काम-क्रोधादि दुर्गुण रहित, सदाचारी एवं मन, वचन आदि बाह्य एवं अभ्यान्तर सम्पूर्ण इन्द्रियहरूलाई वशमा गरेको व्यक्ति हुन्छ । गुरुत्व स्वच्छ जल समान हुन्छ । जुन प्रकारले एउटा राम्रो भाँडामा राखेको निर्मल जल सुखद हुन्छ, उस्तै प्रकारले गुरुत्वमय ज्ञानले उपरोक्त गुणहरूको पत्रताको अपेक्षा राख्दछ, तसर्थ शास्त्रहरूमा सुपात्र शिष्यलाई मात्र ज्ञान दिने प्रक्रिया अपनाइएको हो ।

## मासिक हवन कार्यक्रम

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप २०६६ सालको ज्येष्ठ महिनामा सिद्धाश्रम शक्ति केन्द्रले मासिक हवन कार्यक्रमहरूलाई भव्यरूपमा सम्पन्न गऱ्यो । हवन कार्यक्रमहरूअन्तर्गत ज्येष्ठ ४ गते श्री शिव गोरक्ष हवन कार्यक्रम पशुपति मृगस्थलीस्थित गुरु गोरखनाथको मन्दिर प्रांगणमा, ज्येष्ठ ५ गते तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा, ज्येष्ठ ६ गते तान्त्रोक्त महालक्ष्मी हवन कार्यक्रम लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तथा ज्येष्ठ ७ गते तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम पाटन कुम्भेश्वर स्थित बगलामुखी मन्दिर प्रांगणमा सम्पन्न भयो । उपरोक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम बिहान ७:०० बजेदेखि ८:०० बजेसम्म तथा अन्य हवन कार्यक्रमहरू बिहान ८:०० बजेदेखि ९:०० बजेसम्म सञ्चालन भएको थियो ।

यस्तै मासिक हवनकै शृङ्खलामा सम्पर्क कार्यालय रामघाट पोखराको आयोजनामा गत ज्येष्ठ ६ गते बुधबार स्थानीय विन्ध्यवासिनी मन्दिर प्रांगणमा तान्त्रोक्त विन्ध्यवासिनी हवन कार्यक्रम सम्पन्न भयो भने यता सम्पर्क कार्यालय तनहुँको आयोजनामा ज्येष्ठ ७ गते बिहीबार स्थानीय वेद व्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन कार्यक्रम सम्पन्न भयो । यी हवन कार्यक्रमहरू पनि बिहान ८:०० देखि ९:०० बजेसम्म सञ्चालन भएका थिए ।

## दिव्य गुरु महोत्सव

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले यस धरामा डा. नारायणदत्त श्रीमालीको स्वरूपमा अवतरण लिनुभएको पावनतम दिन अर्थात् अंग्रेजी महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा प्रत्येक महिना मनाउँदै आइरहेको सिद्धाश्रम शक्ति केन्द्रले गत ज्येष्ठ महिनामा पनि यस कार्यक्रमलाई भव्यरूपमा सम्पन्न गऱ्यो । गत ज्येष्ठ ७ गते काठमाडौँको गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको प्रांगणमा उक्त कार्यक्रम आयोजना भएको थियो । बिहान १०:१५ बजे प्रार्थना, निखिल स्तवन, गोरक्ष स्तवनको सस्वर पाठबाट शुभारम्भ भएको उक्त कार्यक्रम दुई चरणमा विभाजित थियो ।

कार्यक्रमको पहिलो चरणअन्तर्गतका क्रममा गुरु पादुका पूजन, मंत्र जप, हवन, आरती आदि सम्पन्न भएका थिए । कार्यक्रममा गुरु पादुका पूजन गर्ने सौभाग्य प्रसाद वितरणको अभिभारा वहन गर्दै साधकदम्पत्ति उत्तम पाठक तथा रेणु पाठकले प्राप्त गर्नुभएको थियो ।

दोस्रो चरणको शुभारम्भमा सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट गुसेद नं ३० का सदस्य साधक सिद्धि महर्जनले स्वागत मन्तव्य राख्नुभएको थियो । दोस्रो चरणका अन्य क्रमहरूमा भजनकीर्तन, प्रवचन, नृत्य आदि रहेका थिए ।

प्रवचन/स्ववचनको क्रममा सावर पन्थी नं. १ तथा सावर पन्थी नं. २ का सदस्यज्यूले स्ववचन राख्नुभएको थियो । कार्यक्रममा सा.प. २ ज्यूले भन्नुभयो– 'प्रतिकूलताबीचको कर्मशीलतामा रमेको व्यक्तिले नै अपेक्षित सफलता हासिल गर्न सक्ने गुणको विकास गरेको हुन्छ, सद्‌गुरुदेवहरूको विशेष कृपा र आशीर्वाद पनि उसैले पाएको हुन्छ । सुख-दुःखका साथ समभावमा रहेर धैर्य र दृढ रहनसक्नुका साथसाथै जस्तै दुःख, संकटको घडीमा पनि सद्‌गुरुदेवहरूप्रतिको श्रद्धा र विश्वास अटल राख्न सक्नुपर्छ ।' सावर पन्थी नं.१ का सदस्यज्यूले रोट महोत्सवको प्रसंग उल्लेख गर्दै यसको महत्त्वको बारेमा चर्चा गर्नुभएको थियो । अबको सांगठनिक संरचना अज्ञात नाथ पन्थीको शैलीमा हुने तथा अबको युग भनेको मंत्र विज्ञान, तंत्र विज्ञान र यंत्र विज्ञानको हुने कुरा पनि उहाँले बताउनुभयो । अब टोल-टोलमा, गाउँ-गाउँमा गोरक्ष निखिल शक्तिपीठ स्थापना गरेर गोरक्ष निखिल शक्ति विष्फोटको अभियानमा लाग्ने बेला आएको कुरा पनि उहाँले बताउनुभयो । उहाँले सद्‌गुरुदेवहरूको कृपास्वरूप प्राप्त नारायण स्थापन प्रयोग पनि सम्पन्न गराउनुभयो । सो कार्यक्रम नारायण नाम संकीर्तनका साथ ३:३० बजे औपचारिकरूपमा कार्यक्रम समापन भएको थियो ।

## गोनिज्योदिविमा प्रतिष्ठापन समारोह

सिद्धाश्रम शक्ति केन्द्रको व्यवस्थापनमा सञ्चालित काठमाडौँको गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा गत ज्येष्ठ २८ गते प्रतिष्ठापन समारोह (Investiture Ceremony) सम्पन्न भयो । सावरपन्थीज्यूहरु तथा सावरमातृकाज्यूको आतिथ्यतामा सम्पन्न भएको उक्त कार्यक्रममा विद्याश्रममा अध्ययनरत विद्यार्थीहरुलाई नैतिकताको बोध गराउँदै Head Boy, Head Girl तथा विभिन्न House का Leader, Class Captain, Vice Captain हरुलाई व्याज तथा स्यास प्रदान गरिएको थियो । विद्यार्थीहरुले आफ्नो जिम्मेवारीलाई सफलतापूर्वक पूरा गर्ने प्रतिबद्धता जनाउँदै सपथ ग्रहण पनि गरेका थिए । संगीत मधुर लहरीका बीचमा सम्पन्न उक्त कार्यक्रममा विद्यार्थीहरुले नृत्य पनि देखाएका थिए ।

## साधना जगत्मा अर्को एउटा फड्को

सिद्धाश्रम शक्ति केन्द्र (सिशके) को आयोजनामा गत ज्येष्ठ ३० गते तान्त्रोक्त महाशक्ति गोरखकाली साधना सम्पन्न भयो । साधनामा सहभागी हुनका लागि नेपालभरिबाट हजारौँ कार्यकर्ताहरुले प्रयास गर्नु भएता पनि सीमित कोटाको कारणले गर्दा जम्मा ५ सय कार्यकर्ताहरुले मात्र सहभागी हुन सौभाग्य पाउनुभएको थियो । सिद्धाश्रम शक्ति केन्द्रले Intermediate Level तथा अज्ञात नाथ पन्थीको संरचना प्राप्त गरेपछिको पहिलो साधना शिविर रह्यो तान्त्रोक्त महाशक्ति गोरखकाली साधना ।

काठमाडौँको बसुन्धरास्थित ए.बी. पार्टी प्यालेसमा सम्पन्न उक्त कार्यक्रममा बिहान १०:३० बजे सद्‌गुरुदेवहरुको स्तुति वन्दनाबाट शुरु भई गुरु पूजन, भजन-कीर्तन, नृत्य, विभिन्न प्रयोगहरु, प्रवचन, साधना, आरती आदि क्रमहरुसँगै समापन भएको थियो । कार्यक्रममा गुरु पूजन गर्ने सौभाग्य साधिकाहरु मधुमति रंजित, लीलादेवी सिंखडा, मीना थापा, शारदा पुडासैनी, निशा ढकाल तथा संगीता श्रेष्ठले प्राप्त गर्नुभएको थियो । कार्यक्रमको बीच-बीचमा सद्‌गुरुदेव एवं मातासम्बन्धी विभिन्न भजनहरु प्रस्तुत हुनुका साथै कार्यकर्ताहरुले तयार गर्नुभएका नृत्यहरु पनि देखाइएको थियो । ललितपुर सम्पर्क कार्यालयले तयार गरेको विशेष काली नृत्यले कार्यक्रममा विशेष आकर्षण थपेको थियो ।

परमपूज्य सद्‌गुरुदेवहरु तथा मातृशक्तिहरुको कृपास्वरुप कार्यक्रमको बीचतिर सिशकेको इतिहासमै पहिलोपटक खुल्लारुपमा मनकामना प्रयोग, दुर्गा प्रयोग तथा वाक् शक्ति प्रयोग सम्पन्न भए । गोरखकाली साधना कार्यक्रमका सहभागीहरुमध्येबाट निश्चित कोटाका कारण कम्प्युटर प्रविधिको गोलाप्रथाद्वारा केहीले मात्र यी प्रयोगहरुमा सहभागी हुने सौभाग्य प्राप्त गर्नुभएको थियो ।

प्रवचनको क्रममा सावर पन्थी नं. १ का सदस्यले बोल्नुभएको थियो । सिद्धाश्रम शक्ति केन्द्रसँग मंत्रतंत्रलगायतका आध्यात्मिक शक्तिहरुको भण्डार रहेको तथा भविष्यमा सद्‌गुरुदेवहरुको कृपा प्राप्त भयो भने सिशकेले भारतवर्षका जुनसुकै साधना, प्रयोगहरु पनि गराउन सक्नेतर्फ उहाँले संकेत गर्नुभयो । साधनामा आफ्ना कमी-कमजोरी, खराबीहरुलाई हटाउँदै शुद्ध पवित्र हृदयका साथ साधना गरियो भने साधनाको सफलतामा कुनै सन्देह नरहने उहाँले बताउनुभयो । विगतमा आफ्नो जीवन जसरी व्यतीत भएको भए पनि अब तपस्वी भएर जीवन जिउन तथा दृढ प्रतिज्ञा तथा संकल्पका साथ जसरी पनि गुरुदेव र मातालाई खुशी पार्छु भन्ने अठोट लिएर साधना गर्नुपर्नेतर्फ उहाँले औँल्याउनुभयो । साधनालाई सावर पन्थी नं. २ का सदस्यज्यूले सम्पन्न गराउनुभएको थियो । तपस्या कमाउनुभन्दा पनि जोगाउन धेरै गाह्रो हुने भएकाले तपस्या खर्च हुनबाट जोगिन सचेत रहनुपर्ने कुरा उहाँले बताउनुभयो । साधनालाई प्रयोगात्मकरुपमा सम्पन्न गराउँदै उहाँले साधनाको विधि तथा विभिन्न नीति-नियमहरुको बारेमा पनि स्पष्ट पार्नुभएको थियो ।

## बाहिरी जिल्लातर्फ

**घार्मी (पोखरा)**: सिद्धाश्रम शक्ति केन्द्र प्रचार प्रसार केन्द्र घार्मीले गत ज्येष्ठ ५ गते सोमबार आश्रम भवन शिलान्यास कार्यक्रम सम्पन्न गऱ्यो । उक्त अवसरमा गुरु पादुका पूजन, भजनकीर्तन आदि गरिएको थियो ।

**छोरेपाटन (पोखरा)**: पोखराको छोरेपाटन आरती सञ्चालन केन्द्रले पनि गत ज्येष्ठ १८ गते सोमबार आफ्नो आश्रम भवनको शिलान्यास गऱ्यो । कार्यक्रममा गुरु पूजन पनि गरिएको थियो ।

**मनवा बजार (पर्सा)**: पर्सा जिल्लाको मनवा बजारमा गत ज्येष्ठ १४ गते एक कार्यक्रमबीच सिद्धाश्रम शक्ति केन्द्र प्रचार प्रसार केन्द्रको शुभारम्भ भयो । सम्पर्क कार्यालय क्षेत्रपुर चितवनको आयोजनामा सम्पन्न भएको उक्त कार्यक्रममा स्तुति वन्दना, भजनकीर्तन, आरती हुनुका साथै आश्रमको बारेमा जानकारी प्रदान गरिएको थियो ।

**नारेश्वर (गोरखा)**: सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय गोरखाको आयोजनामा तथा युनिभर्सल एकीकृत स्वास्थ्य अनुसन्धान तथा विकास फाउण्डेशनको सहयोगमा गोरखाको नारेश्वरमा गत ज्येष्ठ १ गतेदेखि ३ गतेसम्म आयुर्वेद शिविर सम्पन्न भयो । शिविरमा जम्मा ३ सय पाँचजना विरामीहरूले आफ्नो स्वास्थ्य परीक्षण तथा उपचार प्राप्त गर्नुभएको थियो ।

# श्रम गर्न विदेशतर्फ जाँदा तत्काल फाइदा भए पनि दीर्घकालिनरूपमा सामाजिक र आर्थिक विचलन आइपर्ने हुँदा मुलुकभित्रै परिश्रम गर्नु (पसिना बगाउनु) मा नै सबैको भलो छ ।

नेपाल सरकार

**सूचना तथा सञ्चार मन्त्रालय**

सूचना विभाग

विशेष रिपोर्ट

# ३५१ जोडी हातहरूले सपथ खाएको त्यो क्षण

३ सय एकाउन्न जोडी हातहरू आकाशतिर फर्किएका थिए, 'गोरक्ष युग ल्याउँछु म, निखिल युग ल्याउँछु म' बोलको भजनमा आकाशतिर फर्किएका हातहरू सोही तालमा हल्लँदै थिए, तालीको गड्गडाहटले हल गुञ्जायमान भइरहेको थियो, चारैतिर कार्यकर्ताहरूलाई अबीर र लावा छरेर स्वागत भइरहेको थियो, आनन्दको सीमा थिएन, भव्यता र विशालताको आँकलन सहजै हुन सकिरहेको थिएन, प्रशिक्षार्थी कार्यकर्ताहरूको उत्साहले व्यापकता लिइरहेको थियो, तालिमपछि आ-आफ्नो क्षेत्रमा गएर गुरु कार्यमा आफूलाई पूर्णरूपमा समर्पित गरेर सद्गुरुदेवहरूको महान् योजनालाई मूर्तरूप दिन कस्सिने नवप्रवेशी कार्यकर्ताहरूको जोश, जाँगर र उत्साहको तरंग तालिम स्थलमा मात्र नभई टाढा-टाढासम्म तरङ्गित भइरहेको महसुस भइरहेको थियो, सबैको मुहारमा ओज थियो, तेज थियो, लाग्दथ्यो यो ओज र तेज अब तालिम स्थलमा मात्र सीमित नरही अझै तेजोमय र ओजोमय भएर विश्वव्यापी हुनेछ, यसले विश्वलाई नै आलोकित पारेर ' गोरक्ष निखिल युग'को शङ्खघोषमा थप ऊर्जा थप्दैथियो, यो एउटा पृथक् कम्पन थियो, यो भावी प्रशिक्षार्थीहरूका लागि दरिलो उदाहरण थियो, यसले सबै कार्यकर्ताहरूलाई थप ऊर्जा दिइरहेको थियो । यस्तै-यस्तै विशेषताहरूले भरिएको एउटा दिव्य एवं भव्य क्षण थियो– सिद्धाश्रम शक्ति केन्द्रबाट आयोजित ऐतिहासिक १६ औं आधारभूत तालिम तथा प्रशिक्षण कार्यक्रम ।

परमपूज्य सद्गुरुदेवहरूको असीम कृपा, अनुकम्पा एवं आशीर्वादको फलस्वरूप सिद्धाश्रम शक्ति केन्द्रद्वारा जेठ २० र २१ गते आयोजित उक्त तालिम कार्यक्रममा उपत्यकाका काठमाडौं, भक्तपुर, ललितपुरलगायत झापा, जनकपुर, दोलखा, सिन्धुपाल्चोक, काभ्रे, मकवानपुर, पर्सा, चितवन, तनहुँ, लमजुङ , गोरखा, कास्की, बागलुङ, पाल्पा, गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमलगायतका स्थानबाट गरी ३५१ जना प्रशिक्षार्थी कार्यकर्ताहरूको सहभागिता थियो ।

वसुन्धरास्थित पूर्व प्रहरी संगठनको सभाहलमा बिहान १० बजेदेखि संचालन भएको उक्त दुई दिवसीय तालिम सद्गुरुदेवहरूको स्तुति-वन्दना, स्तवन पाठ, आवाहन भजन हुँदै गुरु चरण पादुकाको पूजनसँगै शुभारम्भ भएको थियो ।

सिद्धाश्रम शक्ति केन्द्र भनेको के हो ? यसका लक्ष्य उद्देश्य, संस्थागत संरचना, कार्यक्रम, सांगठनिक संरचना आदि विषयमा सा. प. ३, सा.मा. ४ ज्यू, गुसेद नं. ५ र ६ का सदस्यज्यूहरूले प्रशिक्षण दिनुभएको थियो भने संस्थागत संकल्पको विषयमा जानकारी दिँदै प्रशिक्षार्थीहरूको जिज्ञासा पनि समाधान गरी संस्थागत संकल्प सा.प. २ का सदस्यज्यूले गराउनुभएको थियो । कार्यक्रमको अन्तमा सा.प. नं. १ का सदस्यज्यूले आध्यात्मिक यात्रा भनेको के हो र यसमा कसरी अगाडि बढ्ने भन्ने सन्दर्भमा प्रयोगात्मक अभ्याससहित शुद्धिकरण ध्यान सम्पन्न गराउनुभएको थियो । उक्त अवसरमा उहाँले १० वर्षको अवधिमा आश्रमले प्राप्त गरेका आध्यात्मिक उपलब्धि एवं खजानाहरूका विषयमा जानकारी गराउनुभएको थियो ।

कार्यक्रमको अन्तमा संकल्प-प्रस्ताव पढेर सुनाइएपछिको क्षणमा प्रशिक्षार्थीहरू अर्थात् नवप्रवेशी कार्यकर्ताहरू अत्यन्तै भावमय हुनुभएको थियो । संकल्प प्रस्तावपछि प्रस्तुत विभिन्न भजन र नृत्यहरूबाट कार्यक्रममा थप रौनकता र भव्यता थपिएको थियो । कार्यक्रम निकै नै अनुशासित, मर्यादित, चुस्तरूपमा संचालन भएको थियो भने परमपूज्य सद्गुरुदेवहरूबाट देशभरिका हजारौं आवेदकहरूमध्येबाट प्रशिक्षणका लागि छनौट हुनभएका ३५१ जना प्रशिक्षार्थीहरू तालिममा उपस्थित हुनुभएको थियो ।

ऐतिहासिक रूप लिन सकेको यस १६ औं आधारभूत तालिमको समाप्तिसँगसँगै सिद्धाश्रम शक्ति केन्द्रले आफ्ना कार्यकर्ताहरूको संख्यामा ३५१ जना तालिमप्राप्त नयाँ कार्यकर्ताहरू थप गर्न सफल भएको छ । यसरी संस्थाको विकास र विस्तारसँगसँगै यसमा आवद्ध तालिम प्राप्त कार्यकर्ताहरूको पनि वृद्धि भइरहेको छ । संस्थाबाट आयोजित तालिम कार्यक्रमहरूमा सबैभन्दा बढी प्रशिक्षार्थीहरूको सहभागिता भएको कार्यक्रम नै यस १६ औं आधारभूत तालिम हुन पुगेको छ । छनौट भएका प्रशिक्षार्थीहरू शतप्रतिशत सहभागी हुनुभएको दृष्टिले पनि यस तालिम कार्यक्रम थप ऐतिहासिक हुन पुगेको छ ।

तालिममा सहभागी प्रशिक्षार्थीहरूको स्वत:स्फूर्त नृत्य, जोश, जाँगरबाट तालिम कार्यक्रममा थप ऊर्जा थपिएको थियो भने तालिम सम्पन्न गर्ने क्रममा सम्पूर्ण कार्यकर्ताहरूको जोशिलो खटाइले पनि यसमा थप ऊर्जा थपेको थियो । जय गुरुदेव !

## सावर संरचनाबाट प्राप्त

# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौं । हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् ।*

## असीमित सोच

मन्त्र साधनामा अगाडि बढ्नेहरूको सोच असीमित हुनु आवश्यक छ। सामान्य अर्थमा असीमित सोच भन्नाले कुनै पनि विषय वस्तुमा अथवा कुनै पनि कुरामा संकुचित सोचाई, विचारधारा, दृष्टिकोण नराखी व्यापक र विशाल सोचाईमा अघि बढ्ने भन्ने बुझिन्छ । एउटा सीमित परिधिभित्र, निश्चित कुनै दायराभित्र नरहेर धेरै उच्च अनन्तको सोचाई र चिन्तनमा आफूलाई लैजानुलाई असीमित सोच भन्ने बुझिन्छ। साधना गर्ने साधकहरूले पनि कुनै सीमित शक्ति, बाहिरी भौतिक चीजको आराधना गरेको नभई असीमित, अगोचर, अवर्णनीय दिव्य शक्तिको आराधना गरेका हुन्छन्। यसरी असीमित अनन्त शक्तिको स्वरूपको आराधना गर्ने साधक पनि असीमित विचार धाराको हुनुपर्दछ ।

मानव-मस्तिष्क सधैं सीमित दायरामा चलायमान भइरहेको हुन्छ। प्रत्येक कुरामा प्रत्येक कार्यलाई मात्र नभएर मानिसहरूले जीवनलाई नै सीमित दायराभित्र राखेर हेरिरहेका हुन्छन् । मनुष्यले सधैं शरीरका लागि चाहिने सीमित सांसारीकताबाट आफूलाई गुजारिरहेको हुन्छ । शरीरकै सुख, सुविधा, इच्छा, आकांक्षा एवं परिवारको सुख, आनन्द, सांसारिक मोजमस्तीभित्र मात्रै आफूलाई सीमित राखेको हुन्छ। यसरी एउटा मान्छे जन्मिन्छ, परिवारले पालन-पोषण गरी हुर्काइदिन्छन् । आफ्नो सुख-सुविधा, छोराछोरीको सुख-सुविधा, परिवारको सुख-सुविधा भन्दाभन्दै उमेरले बूढेसकाल छुन्छ अनि मृत्युलाई अगाल्न ऊ विवश हुन्छ । उसको जीवन एउटा सामान्य परिवारको सीमित दायराभित्र मात्रै गुम्सिएको हुन्छ, निसास्सिएको हुन्छ। भौतिकवादीहरू यसरी नै आफूलाई भौतिकताको सीमित दायराभित्र नै पूर्ण ठानी हराइरहेका हुन्छन्, यसरी नै उनीहरूले जीवन बिताइरहेका हुन्छन् । तर तपाईं हामी यिनीहरूभन्दा केही माथि उठेर साधनाको क्षेत्रतर्फ अगाडि बढेका छौं । हाम्रो लक्ष्य, गन्तव्य भनेको भौतिक संसारभन्दा धेरै माथि छ, धेरै उच्च छ, आध्यात्मिकताको गूढ रहस्यभित्रबाट सिर्जिएको संसारको सृष्टि छ ।

आध्यात्मिक संसार पनि व्यापक र विराट छ। यो यति अनन्त छ जसलाई सीमित दायराको सोचाईबाट न त बुझ्न सक्छौं, न त बुझाउन सक्छौं, न त कल्पनाभित्र सजाउन नै सक्छौं। त्यसैले यस्तो व्यापक र विराट सत्तासँगको सम्बन्ध स्थापित गर्न अगाडि बढ्ने मन्त्र साधनाका पारखीहरूले आफूलाई सधैं असीमित सोचमा राख्नुपर्दछ। सामान्य कुरामा अल्झिनेहरूले ठूला-ठूला कुराहरू प्राप्त गर्न सक्दैनन् । सीमित दायरामा हराउनेहरूले ती आध्यात्मिक उच्चताहरू प्राप्त गर्न सक्दैनन्। त्यसकारण प्रत्येक चीजलाई हेर्ने हाम्रो दृष्टिकोण विशाल हुनुपर्दछ, व्यापक हुनुपर्छ । एकतर्फी हेर्ने, संकुचितरूपबाट हेर्ने, घर परिवारको बन्धनले हेर्ने, माया-मोहको दृष्टिकोणले हेर्ने हुनु हुँदैन, राग-द्वेषले हेर्ने, सोच्ने हुनु हुँदैन ।

देवी-देवताहरू महान् छन्, गुरुहरू महान् छन्, यस्ता महान् गुरुहरूको सानिध्यबाट, उहाँहरूको छत्रछायाँबाट मेरो अवश्य कल्याण हुन्छ, अवश्य भइहाल्छ भनी उच्च भावभूमिमा बस्न सक्ने हुनुपर्दछ। अनन्त विश्व ब्रह्माण्डका गूढ रहस्यलाई बुझ्ने चेष्टा गर्ने, जीवन जगत्का सृष्टिलाई उच्च भावले हेर्ने, दैवी सत्ता, ऋषि सत्ता, गुरु सत्ता आदिको चिन्तन, मनन गर्ने हाम्रो असीमित सोच हुनुपर्दछ। साधना गर्दा पनि संकुचित भाव बनाई शंका, उपशंका राखी पूर्ण भावका साथ गर्न सकिएन भने साधनाबाट सफलता प्राप्त गर्न गाह्रो हुन्छ। त्यसैले आफ्नो चिन्तनलाई सधैं विशाल र व्यापक बनाऔं, हेर्ने दृष्टिकोणलाई उच्च बनाऔं, असीमित सोचको विकास गरौं, मन्त्र साधनामा सफलता हासिल गरौं । जय गुरुदेव !

# तपाईं छुट्नुभएको त छैन?

**तान्त्रिक ध्यानका प्रथम चरण, दोस्रो चरणका कक्षाहरू धमाधम सञ्चालन भइरहेका छन्। आजै नाम लेखाई आफ्नो स्थान सुरक्षित राख्नुहोला।**

**प्रथम चरण–** गोरक्ष निखिल वाणी पत्रिकाका सम्पूर्ण सदस्यहरुका लागि खुला ।

**दोस्रो चरण–** प्रथम चरणको ध्यान सम्पन्न गरिसक्ने साधक साधिकाहरुका लागि ।

बाँकी कुरा आश्रमको केन्द्रीय कार्यालय वा सम्पर्क कार्यालयहरूमा आएर बुझ्न सक्नुहुनेछ ।

**हाल ध्यान सञ्चालन भइरहेका र निकट भविष्यमा हुने स्थानहरू–**

केन्द्रीय कार्यालय बसुन्धरा, सम्पर्क कार्यालयहरु भक्तपुर (कटुञ्जे), ललितपुर (लगनखेल), काभ्रे (बनेपा), कास्की (पोखरा रामघाट, विन्ध्यवासिनी, लेखनाथ बडहरे), गोरखा (गोरखा बजार, लक्ष्मीबजार), सिन्धुपाल्चोक (बाह्रबिसे), तनहुँ ।

## आश्रममा उपलब्ध सेवाहरू

- योग, ध्यान, हिप्नोटिज्म, आदि बारे अध्ययन, अनुसन्धान एवं परामर्श सेवा ।
- मन्त्र शक्तिद्वारा हाम्रो दैनिक जीवनमा आइपर्ने विविध समस्याहरूको समाधान ।
- फोटो थेरापीको माध्यमबाट असाध्य रोगहरूको उपचार ।
- मन्त्र तन्त्रको माध्यमबाट साधनामा अघि बढ्न चाहने साधक साधिकाहरूलाई विशेष मार्गनिर्देशन ।
- पूर्ण प्रामाणिकरूपमा विशेष प्रक्रियाद्वारा प्राण-प्रतिष्ठित यन्त्र, माला, आसनलगायत साधनाका लागि आवश्यक सम्पूर्ण सामग्रीहरूको व्यवस्था ।
- परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको बारेमा अध्ययन अनुसन्धान एवं जानकारी चाहनेहरूका लागि गोरक्ष निखिल पुस्तकालयको व्यवस्था ।
- विभिन्न किसिमका रोगहरूको उपचारका लागि विशेष तान्त्रिक हिलिङ्गको व्यवस्था ।

गुरु पूर्णिमाको महत्व, गरिमा र उच्चताको बारेमा त हामीले पत्रिकामार्फत केही खोतल्ने प्रयास गऱ्यौं तर पर्वको महिमा यतिमा मात्र सीमित अवश्य छैन । यहाँनेर गुरु शिष्य परम्पराका केही व्यावहारिक पक्षका बारेमा र वर्तमानमा समाप्त हुँदै गइरहेको यो परम्परालाई पुनर्जीवन दिनुपर्ने आवश्यकताको सन्दर्भमा केही कुरा कोट्याउन आवश्यक हुन्छ । गुरुलाई चिनेर, गुरु पूर्णिमाको महत्व बुझेर मात्र जीवनले पूर्णता पाउन सक्तैन । यसका लागि त गुरु शिष्य परम्परालाई अंगीकार गर्दै जीवन जिउने कलाको विकास गर्नु जरुरी हुन्छ । हुन त हाम्रो समाजमा आजभोलि शिष्यभन्दा गुरु धेरै भइसकेका छन् । आजभोलि भारतवर्षमा गुरुहरु यति धेरै भए कि कतिपय गुरुहरुलाई चेला पाउन मुश्किल भयो भने चेलालाई पनि धर्म संकट पऱ्यो । कुन गुरुलाई सही मान्ने कुनलाई झुटो, जो हेरे पनि उस्तै छन् अनि कहिले एउटाको पछि लाग्यो कहिले अर्कोको पछि लाग्यो यसरी यता उता गर्दा गर्दै जीवन बितेको पत्तै भएन तर सही र सद्‌गुरु भने पाउनै सकिएन । वास्तवमा अहिले सद्‌गुरुलाई पनि सही शिष्य पाउन गाह्रो छ भने सही शिष्यलाई पनि सद्‌गुरुसम्म पुग्न गाह्रो छ किनकि समाजमा गुरु र शिष्यको यति धेरै भीड छ कि छनौट गर्नै मुश्किल पर्दछ। हुन त गुरु छान्ने होइन यो त आफैं भित्रबाट घटित भएर सद्‌गुरुले आफूसँग शिष्यलाई जोड्ने प्रक्रिया हो । तैपनि सद्‌गुरुलाई चिन्न नसक्दा धेरै मानिसले धोका खाइरहेका हुन्छन् । व्यर्थकै प्रपञ्चमा जीवनको अमूल्य क्षणलाई गुमाइरहेका हुन्छन् । सद्‌गुरुको अभावमा जतिसुकै ठूलो भनिएका गुरुको शरणमा गए पनि लाखौं शिष्यहरु वरिपरि लगाएर ठूलो तामझामका साथ आसन जमाउने गुरुकहाँ पुगे पनि शिष्यको मनमा एक प्रकारको अभाव व्याप्त रहन्छ । सबैथोक भएर पनि केही नपुगेजस्तो, अभाव, न्यूनता र छट्पटीले गर्दा उ कहिल्यै सन्तुष्ट हुन सक्तैन । तर जब उ सद्‌गुरुको शरणमा पुग्छ, सद्‌गुरुको स्थूल वा सूक्ष्म सानिध्यता प्राप्त गर्छ, तब मात्र उसले पूर्ण सन्तुष्टि पाउँछ ।

यदि तपाईंको जीवनमा पनि यस्तो अभाव खट्कीरहेको छ भने बुझ्नुस् कि तपाईंको गन्तव्य अन्तै छ, तपाईंको जन्मजन्मान्तरको सद्‌गुरु अन्यत्रै कहीं हुनुहुन्छ । यस्तै सद्‌गुरुको अभावमा भट्किरहेका सम्पूर्ण आत्माहरुलाई शिवस्वरुप सद्‌गुरुदेवसँग जोड्ने काम निमित्त बनेर यो पत्रिकाले गरिरहेको छ । यो हाम्रो लागि अत्यन्तै गौरवको विषय हो । बाटो नपाएकाहरु, बाटो बिराएकाहरु र बाटो खोजिरहेकाहरु सबैलाई सही मार्ग देखाएर सद्‌गुरुदेवसम्म पुऱ्याउने यस पुनीत कार्यलाई अझ बढी सबल र सक्षम रुपमा अघि बढाउँदै गोरक्ष निखिल युग स्थापनाका लागि एउटा मात्रै ईँटा थप्न सके पनि हाम्रो लागि लाख हुनेछ । गुरु पूर्णिमाको यस पावन घडीमा सम्पूर्ण आत्माहरुलाई गुरु चरणमा जोडिएर जीवनलाई पूर्णतातर्फ अग्रसर गर्न सक्ने कृपा, आशीर्वाद र अनुकम्पा प्राप्त होस् भनी परमपूज्य सद्‌गुरुदेवहरुसमक्ष हार्दिक प्रार्थना गर्दछौं । सर्वे भवन्तु सुखिनः सर्वे सन्तु निरामयाः । सर्वे भद्राणि पश्यन्तु मा कश्चित् दुःख भाग्भवेत् ।।